हरिप्रसाद प्रधानयात कयाः चिचीधंगु च्वसुत तःगूमछि पिहांवःगु दु । तर वया समस्त जीवनीया तथ्यत मात्तुमालाः व्यवस्थित जीवनीया रुपय् पिब्वय्‌गु ज्या न्हापांखुसी जूगु दु । थ्व अनुसन्धान–प्रबन्धं हरिप्रसाद प्रधानया जीवनीयात दुग्यंक म्हसीकेगु ह्वःता काय्‌फइ ।

हरिप्रसाद प्रधानया थ्व जीवनीयात छगू प्रेरणामूलक जीवनीया रुपय् काय्‌फु। वय्‌कःया थ्व जीवनीयात ब्वनाः ब्वँमितय्‌सं बांलाःगु शिक्षा काय्‌फै। छम्ह साधारणम्ह व्यक्ति नं थःगु आपालं कुतलं देय् व जनताया निंतिं असाधारण योगदान बियावनेफु धैगु खँ थ्व अनुसन्धानं प्रमाणित याःगु दु। गुगु इलय् विज्ञानया विकास मजूनि, आधुनिकीकरणया थालनी मजूनि, शिक्षित मनूत कुत्तुकुलाः मालेमाःगु इलय् नं हरिप्रसाद प्रधानं यानाथकूगु ज्या व बियादीगु योगदान असाधारण, उदाहरणीय, अतुलनीय व शिक्षाप्रद जू।

चुनावय् त्यानाः बंगालया सर्वसाधारण जनतातय्‌त बंगालया दासत्वं मुक्त याय्‌गु ज्याय् हरिप्रसाद प्रधान ताःलाय्‌मफुत। चुनावय् बूसां आपालं कुतः यानाः उगु दासत्व चीकेगु अवसर प्राप्त जूसां वय्‌कःया उगु कुतःयात थःगु हे समूहया दुजःतय् समर्थन मदयाः असफल जुइमाःगु खः। फलस्वरुप् बंगालया जनतां थौंतक नं दुःख व कष्ट फय् मालाच्वंगु दु।

अथे हे, निक्वःगुखुसी प्रधानन्यायाधीशसया पद चूलाःबलय् दुगु सीमित अधिकार व थःगु अस्वस्थताया हुनिं वय्‌कलं न्हापा थें कानुनया ख्यलय् योगदान बियावनेमफुत।

# हरिप्रसादया वंशवृक्ष

- भाजु लक्ष्मीनारायण (धी थकु)
  - भाजु नरसिंह
  - लक्ष्मीदास (जोगमाया)
    - राय साहेब हरिदास (धन कुमारी)
    - रामकृष्ण (भोजलक्ष्मी)
      - हिरा लाल (हिरा लक्ष्मी)
      - राय साहेब हरिप्रसाद (अमृतलक्ष्मी)
        - अरुण चन्द्र (सीतादेवी)
          - जयन्त (मन्ना)
            - अम्बर
          - राजन (विशिता)
            - आदित्य
          - जयश (अन्जु)
            - असिम
          - राजेश (बिनि)
            - श्रेयश
        - तिलक कुमार (जानकी देवी)
          - शशी (चन्द्रशोभा)
            - सुबोध
          - सुनिल (आरिक माला)
            - पयस
          - सुशील (कविता)
            - आर्यमन
          - सुदीप (रमा)
            - रियान
    - काजि सिंह
    - मोति सिंह
    - (टिकालक्ष्मी देवी) राय साहेब लम्बोधर (शान्तादेवी-Alais जगतलक्ष्मी)
    - शिव दास
  - मञ्जुवीर
  - राजवीर
  - पूर्णनारायण
  - हर्षनारायण
  - तुलसी नारायण
  - केशव नारायण
  - चन्द्रवीर





हरिप्रसाद प्रधान व तिरिमय्‌जु अमृतलक्ष्मी



हरिप्रसाद प्रधान जन्म जूगु छेँ, तुरुक कोठी



SANAD

To

Babu Hari Prasad Pradhan,
Vice-Chairman, Municipality and District Board,
Darjeeling,
Bengal.

I hereby confer upon you the title of Rai Sahib as a personal distinction.

Reading
Viceroy and Governor General of India.

Simla,
The 3rd June 1924.






हरिप्रसाद प्रधानयात ब्रिटिश सरकारं सन् १९२४ य् ब्यूगु राई साहिबया सनद (च्वय्) व मेडलया न्ह्यःने व ल्यूनेया किपा



हरिप्रसाद प्रधानयात एस०पी० दार्जीलिङय् सन् १९२४ य् ब्यूगु पेस्तोल



हरिप्रसाद प्रधानया दार्जीलिङया छेँ । जवपाखे वया तिरिमय्‌जु



स्व. हरिप्रसादया मसी तय्‌गु थल



हरिप्रसाद प्रधानयात जुजु त्रिभुवनं प्रधानन्यायाधीशया शपथ ग्रहण याकूगु



सर्वोच्च अदालतया फुल बेन्च, हरिप्रसाद प्रधान प्रधानन्यायाधीशया कुर्सी




अन्तर्राष्ट्रिय न्यायिक कन्फेरेन्स, न्हूदिल्ली हरिप्रसाद प्रधान



सर्वोच्च अदालतय् तयात:गु श्रीयन्त्र



हरिप्रसाद प्रधान व गुरु श्री १०११ रामस्नेही बाबा गोपाल बाबाया समाधि मृगस्थली पशुपती माक:तय्त फल नकाच्वंगु




हरिप्रसाद प्रधानं च्वःगु ब्रम्ह-सन्देश सफूया ख्वा:पौ



हरिप्रसादं च्वयात:गु My Ancestry सफूया पाण्डुलिपि







हरिप्रसाद प्रधानया पुलांगु व न्हूगु छेँ । न्हूगु छेँया ब्लूप्रिन्ट ।



दार्जीलिंङ्य् दुगु धिरधाम देगः




श्री लक्ष्मीदास कसजुया ख्वप इनाचोत्वालय् दुगु कूल छेँ

मिति २०६१ चैत्र ३० गते को कान्तिपुर पत्रिकाबाट

दृष्टिकोण KANTIPUR Tuesday, April 12, 2005

# हरिप्रसाददेखि हरिप्रसादसम्म

कुमार रेग्मी

आफ्नो अभिव्यक्ति संविधानअनुकूल लाग्छ भने प्रधानन्यायाधीशले यसलाई अदालतको व्याख्यामा परिणत गरिदिए हुन्छ। होइन त्यसो गर्न संविधानले दिँदैन र त्यसो गर्न सक्नुहुन्न भने राजनीतिक भाषण गर्ने, कार्यकारिणीको प्रवक्ता बन्ने काम छाड्नुहोस्। अघिल्ला हरिप्रसादको बाटो अनुसरण गर्नुहोस्।

२०६१ चैत ३० गते कान्तिपुर न्हिपती पिदंगु
हरिप्रसाद प्रधाननाप स्वापू दुगु कुमार रेग्मीया च्वसु

# जसले असत्यसँग कहिल्यै सम्झौता गरेन

श्री हरिप्रसाद प्रधान नेपालको सर्वोच्च अदालतका प्रथम प्रधान न्यायाधीश हुनुहुन्थ्यो। आफू दशवर्षको नहुँदै पिता रामकृष्ण कसजूको निधन भएकोले उहाँको बाल्यकाल त्यति सुखी थिएन। सानैदेखि उच्च महत्वाकांक्षाका धनी हरिप्रसाद भक्तपुरको कसजू खलकका हुनुहुन्थ्यो र शिक्षाप्रतिको अदम्य मोहले घरबाट भागेर दार्जिलिङ गई त्यहाँ उच्च शिक्षा हासिल गर्नुभयो।

नेपालका पहिलो इन्जीनियर पद्मसुन्दर मल्ल र डा. जीतसिंहको परिवारसँग उहाँको वैवाहिक सम्बन्ध भएको थियो। अर्थशास्त्र एम.ए. र कानूनमा स्नातक गर्नुभएका हरिप्रसादले दार्जिलिङबाटै म्याट्रिक र स्कटिस चर्चेस कलेजबाट एम.ए. गर्नुभएको थियो।

अंग्रेजको शासनमा भारतमा "राय साहेब" पदवी पाउनु निकै गौरवको कुरा मानिन्थ्यो। हरिप्रसादले सन् १९२४ मा सो पदवी पाउनुभयो। संभवतः नेपालीहरूमा सो पदवी पाउने उहाँ पहिलो हुनुहुन्थ्यो।

साहित्यप्रति समेत प्रशस्त अभिरूचि राख्ने हरिप्रसाद प्रधानले दार्जिलिङको नेपाली साहित्य सम्मेलनको सभापतिको रूपमा धेरै वर्ष सेवा गर्नुभएको थियो। कानून र अर्थशास्त्रका विद्वान श्री प्रधान राजनीतिप्रति पनि त्यत्तिकै दिलचस्पी राख्नुहुन्थ्यो। दार्जिलिङ शहरको "म्युनिसिप्यालिटी" र जिल्ला परिषद्का 'भाइस चेयरम्यान' समेत हुनुभएका श्रीप्रधानको व्यक्तित्व देखेर त्यसबेला अंग्रेज प्रशासकहरू पनि प्रभावित भएका थिए।

दार्जिलिङमा बस्ता हरिप्रसाद प्रधानले त्यहाँका नेपालीहरूमा जागरण फैल्याउन "हिलमेन्स एशोसियसन" गठन गरी त्यसको नेतृत्व आफैंले लिनुभयो। सत्य, त्याग, शिक्षा प्रचार, साहित्य सेवा र समाज सेवाका क्षेत्रमा परिचित्ने प्रधानले कलकत्ता विश्वविद्यालयको प्रवेशिकामा नेपाली भाषा राख्न र भारतमा नेपाली भाषालाई सम्मान दिलाउन ठूलो योगदान गर्नु भएको थियो। 'हिलमेन्स एशोसियसन'- का तर्फबाट हरिप्रसाद प्रधानले गरीब नेपाली छात्रछात्रालाई छात्रवृत्तिको व्यवस्था गरिदिनुभएको थियो र त्यसबाट धेरै लाभान्वित भए।

दोस्रो विश्वयुद्धको समयमा अंग्रेज शासकहरूले भारतका धेरै नेतालाई "शान्ति सुरक्षा कानून" अन्तर्गत ह्यालखानामा थुने। त्यही समयमा नेपा-




लका राणाशासकहरूको अनुरोधमा भारतमा सक्रिय रहेका धेरै प्रबुद्ध नेपालीहरू पनि थुनिए। नेपालबाट राणाशासन समाप्त हुनुपर्छ भन्ने आवाज उठाएर भारतमा बस्ने नेपालीहरूलाई सक्रिय, संगठित र सचेत गराउन लागेकोमा संलग्न भएका राणाशासकहरूको अनुरोधमा हरिप्रसाद प्रधान, धरणीधर कोइराला, सूर्यविक्रम ज्ञवाली, सन्तबीर लामा आदि सन् १९४४ मा दार्जिलिङमा पक्राउ पर्नुभएको थियो।

ह्यालखानाबाट रिहा भएपछि पनि उहाँले आफ्नो बाटो त्याग्नु भएन। जस्तै आपतविपद् र संकट आइपरे पनि सत्यको बाटो र जीवनको लक्ष्य त्याग्नुहुँदैन भन्ने आदर्श बोकेर अघि बढ्नु हुने हरिप्रसाद सन् १९३० देखि १२ वर्षसम्म भूटान नरेशका कानूनी सल्लाहकार र सन् १९५० मा 'सिक्किम स्टेट काउन्सिलर' हुनुहुन्थ्यो। दार्जिलिङको जिल्ला अदालतमा सरकारी वकील हुँदा उहाँलाई त्यस क्षेत्रमा चिनेहरू कति थिए।

सिक्किमका साहित्यप्रेमीहरूले स्थापना गरेको 'अपांगन साहित्य परिषद्' मा पनि हरिप्रसादले निकै योगदान गर्नुभएको थियो। सो संस्थाको सभापति समेत हुनुभएका प्रधान नेपाली जहानियाँ शासन समाप्त भएर प्रजातन्त्र स्थापना भएपछि सर्वोच्च अदालतका प्रथम प्रधान न्यायाधीश हुनुभएको थियो।

राष्ट्रपिता श्री ५ त्रिभुवनबाट हरिप्रसाद प्रधानलाई सो पदमा नियुक्त गरिबक्सेको थियो। हरिप्रसाद प्रधानलाई वि.सं. २००८ सालमा सर्वोच्च अदालतको प्रधान न्यायाधीश नियुक्त गर्दा त्यसबेला सरकारको विरोध गर्ने व्यक्ति एवं समूहहरूले समेत प्रधानको नियुक्ति प्रति सन्तोष र प्रसन्नता व्यक्त गरेका थिए।

'सादा जिन्दगी' महत्वाकांक्षा, अदम्य साहस, निष्पक्ष दृष्टिकोण र दूरदर्शिताका धनी हरिप्रसाद प्रधानको जीवन सधैं कर्तव्यमय थियो। सक्रियता भनेको जीवन हो र निष्क्रियता भनेको मृत्यु हो भन्ने कवि सागरको भनाइलाई सधैं जीवनको प्रेरणास्रोत मान्नुहुने हरिप्रसाद प्रधानले कहिले पनि अन्याय, अत्याचार, अन्धकार, थिचोमिचो र असत्य पक्षहरूसँग सम्झौता गर्नु भएन। भक्तपुरको एउटा अँध्यारो घरमा जन्मेर दार्जिलिङ र सिक्किमका लाखौं नेपालीलाई उज्यालोतिर डोऱ्याउने हरिप्रसादै प्रधानले नेपालको न्यायिक क्षेत्रमा पनि ठूलो योगदान दिनुभएको छ।

स्वदेश तथा विदेशमा बसेर नेपाल र नेपालीहरूको लागि अनुपम योगदान गर्ने व्यक्तित्वहरूमा हरिप्रसाद प्रधानको नाम माथिल्लै पंक्तिमा आउँछ। सरल, इमान्दार र निर्भीक स्वभावका प्रधान जस्तै ओझेल परेका अन्य व्यक्तिहरूबारे पनि खोजी गरी उहाँहरूको व्यक्तित्वलाई प्रकाशमा ल्याउन सके देशका लागि केही गर्न उत्साहित हुने नयाँ पुस्तालाई प्रेरणा मिल्ने थियो कि?

□ युवराज गौतम

मिति २०४९ वैशाख २९ गतेको गोरखापत्रबाट

२०४९ वैशाख २९ गते गोरखापत्र न्हिपती पिदंगु
हरिप्रसाद प्रधाननाप स्वापू दुगु युवराज गौतमया च्वसु

## भूतपूर्व प्रधान न्यायाधीश प्रधानको देहावसान

(हाम्रा सम्वाददाताद्वारा)

[illegible] ... सम्मिलित हुनुहुन्थ्यो ।

स्वर्गीय प्रधानको जन्म मुम्बुक, सिक्किममा भएको थियो । वहाँले माध्यमिक शिक्षा दार्जिलिङ्गमा र उच्च शिक्षा (एम.ए., एल्.एल्.बी.) कलकत्तामा हासिल गर्नु भएपछि दार्जिलिङ्ग र सिक्किममा धेरै वर्ष सम्म वकालत गर्नु भयो। उहाँले नेपालको सर्वोच्च अदालतमा करीब ७ वर्ष [illegible] गर्नु भयो। प्रधान २००८ सालमा खडा भएको पहिलो प्रधान न्यायालयको प्रथम प्रधान न्यायाधीश हुनुभएकोले २०१७ सालमा सर्वोच्च अदालतको प्रधान न्यायाधीश हुनु भयो वहाँको राजीनामा श्री ५ महाराजाधिराजबाट गत मार्ग २६ गते स्वीकार गरिबक्से [illegible] । उहाँको दुई छोरा र [illegible] छोरी हुनुहुन्छ ।

[illegible]

श्री प्र. [illegible] शोक प्रकट गर्दै [illegible] अदालतका [illegible] प्रधान न्यायाधीश श्री [illegible] हाम्रो प्रतिनिधिलाई भन्नुभयो— प्रधान एक मुख्य र प्रगतिशील न्यायाधीश हुनुहुन्थ्यो । [illegible] अस्वस्थ हुनुभएता पनि [illegible] पहिले जस्तै दृढ हुनुहुन्थ्यो ।

सर्वोच्च अदालतका [illegible] वकिलले हरिप्रसादका देहावसानमा ठूलो दुःख प्रकट गर्दै [illegible] स्वर्गीय प्रधानले आफ्नो कार्य [illegible] न्याय दिलाउनमा साहसका साथ निर्णय दिनु हुन्थ्यो । उहाँले कानून र न्याय को लागि ठूलो परिश्रम र संघर्ष गर्नु भएको थियो ।

जीवनी अन्तर्गत Last [illegible]

## अतीतलाई श्रद्धा सुमन

भनिन्छ, न्यायाधीश मर्दैनन् किनकि तिनले गरेको फैसलामा तिनी बाँचिरहेका हुन्छन् । यसै कुराको पुष्टिस्वरूप नेपाली कानूनी क्षितिजका प्रज्वलित तारा हुन प्रथम प्रधान न्यायाधीश हरिप्रसाद प्रधान ।

सम्भवतः एम.ए., बी.एल. पास गरेका प्रधान कायस्यज्यू कहलाउने नेवार परिवारका भएपनि आफूलाई प्रधान नै लेख्ने हरिप्रसाद प्रधान (नेपालको भक्तपुरमा पुर्ख्यौली थलो भएपनि) सिक्किम राज्यको राङपानी भन्ने ठाउँका जमिन्दार हुन् । दार्जीलिङमा समेत बसोबास गरेका प्रधानको पूर्खाको नाममा अहिले पनि "हरिदासहट्टा" ठाउँ त्यहाँको कचहरी रोडमा एउटा टोल छ जसले गर्दा प्रवासी नेपाली प्रधान दार्जीलिङ र कलकत्तामा अध्ययन गरेको हुँदा भारतीय कानून अनुभवलाई नेपालमा भित्र्याएर कानून भण्डारमा एउटा गुण लगाएका छन् ।

प्रजातन्त्र पश्चात २००८ साल साउन ७ गतेका दिन नेपालको गरिमामय पद प्रधान न्यायाधीश पदमा नियुक्त हुनु भएका प्रधानले न्यायालयलाई संस्थागत गर्नुका साथ साथै प्रधान न्यायालय ऐन बमोजिम प्राप्त अधिकारलाई आधार मानेर आधुनिक संविधानवादका धारणालाई शुरुवात गर्नु भयो । उहाँले कानूनी राज्यको स्थापना गराउन, संविधानको सर्वोच्चता कायम राख्न, वैयक्तिक स्वतन्त्रताको संरक्षणका लागि निर्वाह गर्नु भएको भूमिका न्यायिक जगतमा सधैं पूर्णिमाको जून झैं उदाहरणीय छ । प्रधान न्यायालयमा २००८ देखि २०१३ सालका प्रधान न्यायाधीश हरिप्रसाद प्रधानलाई वेदकृष्ण श्रेष्ठ (२०१०), विशेश्वरप्रसाद कोइरालाको मुद्दा (२०१०), गणेशमान श्रेष्ठको मुद्दा (२०१०), भरतशमशेर समेतको मुद्दा (२०११), हैदर खाँ (२०१२), चक्रमान शाक्यको मुद्दा (२०१०), मृगेन्द्रशमशेरको मुद्दा (२०१०) ले अविस्मरणीय बनाई दिएको छ भने न्यायमूर्ति हरिप्रसाद प्रधानको दोस्रो कार्यकाल (२०१८-२०२०) को हिरालाल भण्डारीको मुद्दा (२०२०), भरत मिश्रीको मुद्दा (२०२०) ले थप सुनमा सुगन्ध थपेको छ ।

निष्पक्ष न्यायकर्ता, धार्मिक र उदार चरित्रका प्रधान कसैप्रति पनि अन्याय नहोस्, न्याय ठीक ठाउँमा परोस्, न्याय सम्पादनमा हस्तक्षेप नचाहने भन्ने व्यक्तित्व धनी हुनुहुन्थ्यो । न्याय सम्पादनमा साहसिक र निर्भिकताका साथ कार्य गर्ने कुरा कानूनी राज्य स्थापनार्थ, ऐन कानून संशोधनार्थ ध्यानाकर्षण, कार्यकारिणी शक्तिको प्रयोग गर्ने फैसला कार्यान्वयनका गराउन श्री ५ मा जाहेर गरेकोबाट पुष्टि हुन आउँदछ ।

न्याय कानूनलाई उच्चता राख्न सधैं कटिबद्ध प्रधानले न्यायलयको गरिमामय छाप नेपाली समाजमा छोड्न सक्षम हुनुभयो । यसरी २०२०।८।२९ मा राजीनामा गरेको केही समयपश्चात यस लोकबाट बिदा हुनुभएका प्रधानलाई नेपाली कानूनी जगतले गुमाउन पुग्यो । प्रधानले नेपाली कानून क्षेत्रमा लगाएको गुण तथा देन तिर्न नसकेपनि उहाँको सम्मान तथा श्रद्धा सुमन गर्न सक्नु पर्दछ न कि पैसाको लागि मात्र सम्झना गरेर जस्तै एक विद्वान अधिवक्ताको विचारमा जब जब न्यायपालिकाको स्वतन्त्रताको प्रश्न उठ्ने गर्दछ त्यहाँ हरिप्रसाद प्रधानको नाम अनिवार्यतः गाँसिने छ तथा जब जब न्यायपालिकामा दबाब वा हस्तक्षेप जस्ता कुराको चर्चा चल्दछ त्यहाँ अनिवार्यतः हरिप्रसाद प्रधानको स्मरण गर्ने गरिन्छ ।

नेपाली कानूनी इतिहासका अग्रज पथ प्रदर्शक प्रधान न्यायाधीश हरिप्रसाद प्रधानको एउटा सूक्ति राख्दै हामी नयाँ कानून व्यवसायी एक पटक प्रधान न्यायाधीश हरिप्रसाद प्रधानलाई पुनः हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछौं ।

"सरकार चिल हो, जो स्वच्छन्द तवरले आकाशमा रिङदछ, नागरिक कुखुराका चल्ला हुन् जसलाई गाँज्न चिल सदैव प्रयत्नशील रहन्छ । अदालत ती कुखुराका बच्चाको माऊ हो जसमा चिलले चल्लालाई झम्टिन खोजे आफ्नो पखेटा फिजाएर चल्लाको रक्षा गर्दछ ।"

- अस्तु -

स्व. हरिप्रसाद प्रधान

ADVOCACY [illegible]

हरिप्रसाद प्रधान मदय्‌धुंकाः पिदंगु बुखँ व
प्रधानयात श्रद्धाञ्जलि देछायातःगु छपु च्वसु



सर्वोच्च अदालतया उद्‌घाटनया दिनस स्व. हरिप्रसाद जुजु महेन्द्रनाप



सर्वोच्च अदालतया उद्‌घाटन समारोहय् हरिप्रसाद प्रधानं भाषण यानाच्वंगु




ख्वप ल कलेजया Block 'A' भवन
स्व. हरिप्रसाद प्रधानया नामय् समर्पित
यानातःगु दु



सैलेशचन्द्र प्रधानं छगू सफुती
स्व. प्रधानया खँ च्वयातःगु



UNIVERSITY OF CALCUTTA.

This is to certify that
Hariprosad Prodhan
obtained the Degree of Master of
Arts in this University at the Annual
Examination in the year 1918, the special
branch in which he was examined having
been Political Economy and that he was
placed in the Second Class.

Vice-Chancellor.

Dated the 16th December 1918

हरिप्रसाद कलाचार्य एम. ए. पास
जूगु सर्टिफिकेट



25 Rs.

GOVERNMENT OF INDIA

TWENTY FIVE RUPEES

620 of 1920

First/Renewed Certificate under section 7 of the "Legal Practitioners' Act, 1879".

This Certificate is granted to Rai Saheb Hori Prosad Prodhan, who was admitted as a Pleader by the High Court of Judicature at Fort William in Bengal on the 23rd day of November 1920, and authorises him to practise as such up to the 31st day of December 1944, in the Courts and Offices following, viz.:—

In all Civil and Criminal Courts subordinate to the High Court, and in all Revenue Offices.

~~Signed and sealed by order of the High Court~~ / Given under my hand and the seal of the Court this the 3rd day of January 1944.

Registrar.
District Judge,

राय साहेबया पदवी प्राप्त जूगु प्रमाणपत्र

# लिधँसा

अनिल, प्रचण्डराज (विसं २०५४), प्रधान न्यायाधीश हरिप्रसादको सम्झनामा, शेषराज शिवाकोटी (संपा.), न्याय भाग- ५, हरिप्रसाद प्रधान अंक -१ (पृ. ९-११) । येँ : ज्ञानगुण कानून प्रतिष्ठान ।

घिमिरे, सोमनाथ (विसं २०५४), निष्पक्ष र निर्भिक न्यायकर्ता हरिप्रसाद प्रधान, शेषराज शिवाकोटी (संपा.), न्याय भाग- ५, हरि प्रसाद प्रधान अंक -१ (पृ. १५-१९) । येँ : ज्ञानगुण कानून प्रतिष्ठान ।

तिमिल्सेना, रामकृष्ण (विसं २०५४), हरिप्रसाद प्रधान एक सम्झना, शेषराज शिवाकोटी (संपा.), न्याय भाग- ५, हरिप्रसाद प्रधान अंक -१ (पृ. ३०-३५) । येँ : ज्ञानगुण कानून प्रतिष्ठान ।

तुलाधर, प्रेमशान्ति (नेसं ११२०), नेपालभाषा साहित्यया इतिहास । येँ : नेपालभाषा एकेडेमी ।

दाहाल, काशीराज (विसं २०५४) , कानूनी राज्यको स्थापनामा न्यायमूर्ति हरिप्रसाद प्रधानको योगदान,

धमला, जय (सन् १९८३), सिक्किमको इतिहास । दार्जीलिंङ : श्याम प्रकाशन ।

प्रधान, प्रतापचन्द्र (सन् २०१०), हरिप्रसाद प्रधान, शैलेश प्रधान (संपा.), चाँप गुराँस (सिक्किमे ब्यक्तित्व विशेषांक) (पृ. ३४५-३५५) । सुम्बुक : चाँप गुराँस प्रकाशन ।

प्रधान, भुवन (सन् १९९३), सिक्किममा स्व. लक्ष्मीदास प्रधानको योगदान । गान्तोक : सिक्किम बोल्छ प्रकाशन ।

प्रधान, शैलेश, (सन् २००९), मेरा दृष्टिकोणहरु : मेरा अवधारणाहरु । सुम्बुक : चाँप गुराँस प्रकाशन ।

प्रधान, हरिप्रसाद, मिति मदु, व्रम्ह संदेश । यें : जोरगणेश प्रेस ।

बस्नेत लिलाबहादुर (२०५४), प्रधान न्यायाधीश स्वर्गीय हरिप्रसाद प्रधान : ब्यक्तित्व स्मरण, शेषराज शिवाकोटी (संपा.), न्याय भाग- ५, हरि प्रसाद प्रधान अंक -१ (पृ. २०-२३) । यें : ज्ञानगुण कानून

लावर, जीवन (सन् २०००), हरिप्रसाद प्रधान एक परिचय, सुनचरी, पृ ३ ।

वस्ती, प्रकाश (२०५४), स्व. हरिप्रसाद प्रधान एक चिन्तन – एक दर्शन, शेषराज शिवाकोटी (संपा.), न्याय भाग- ५, हरिप्रसाद प्रधान अंक -१ (पृ. १२-१४) । यें : ज्ञानगुण कानून प्रतिष्ठान ।

वस्ती, प्रकाश (सन् २०११), आखिर हरिप्रसाद प्रधान नै किन ?, www.ncf.org.np/ page=activities2.

शम, पारसमणि (२००८), इतिहास निर्माता, सिक्किमका प्रमुख दिवंगत स्रष्टा र द्रष्टाहरु, टि.बी. चन्द्र सुब्बा (संपा.), बुद्ध जयन्ती । गान्तोक : किनार प्रकाशन ।

शर्मा, गणेशराज (संपा.) (विसं २०७४,) विश्वेश्वरप्रसाद कोइरालाको आत्मवृत्तान्त (पुनर्मुद्रित) । यल : जगदम्बा प्रकाशन ।

शर्मा, जनकलाल (२०५४), निर्भिक न्यायमूर्ति हरिप्रसाद प्रधान, शेषराज शिवाकोटी (संपा.), न्याय भाग- ५, हरि प्रसाद प्रधान अंक -१ (पृ. १-८) । यें : ज्ञानगुण कानून प्रतिष्ठान ।

शर्मा, तुलसीराम (सन् १९९६), सिक्किम हिजोदेखि आजसम्म । गान्तोक : आँकुरा प्रकाशन ।

शाक्य, हेमराज (नेसं ११०८), बोधिमण्डप कुटागार महाबुद्ध-मन्दिर संक्षिप्त-इतिहास । यल : चक्रराज शाक्य व मेपिं ।

शिवाकोटी, शेषराज (न्ह्य.) (२०५४), नेपाली साहित्य सम्मेलनको उद्घाटन समारोहमा हरिप्रसाद प्रधानको वक्तव्य, शेषराज शिवाकोटी (संपा.), न्याय भाग- ५, हरिप्रसाद प्रधान अंक -१ (पृ. १७-१९) । यें : ज्ञानगुण कानून प्रतिष्ठान ।

श्रेष्ठ, शंकरकुमार (२०५४), हरिप्रसाद प्रधान – स्वतन्त्र न्यायपालिकाका कोसेढुंगा, शेषराज शिवाकोटी (संपा.), न्याय भाग- ५, हरिप्रसाद प्रधान अंक -१ (पृ. ३९-४०) । यें : ज्ञानगुण कानून प्रतिष्ठान ।

Pradhan, K. (2008), *The life and times of a plantsman in the Sikkim Himalayas*. Gangtok: K. C. Pradhan.

Pradhan, K. (2018), *The life and times of a plantsman in the Sikkim Himalayas* (second edition). Gangtok: K. C. Pradhan.

Shrestha Malla, YB (ed.), (2010), *The Shivapuri Baba*. Kathmandu: Anees, Vivek, Pallavi & Vijaya.

Shrestha, R. S. (1018), *The Newars world-wide connecting the dots Sikkim.* Gangtok: Karuna Devi Smark Dharmarth Guthi.

Singh, H. L. (2009), *Some memorable lives of Nepal*. Lalitpur: Shavitri Singh.

# लितँसा

# न्याय

**भाग – ५**

**हरि प्रसाद प्रधान अंक – १**



ज्ञानगुन कानून प्रतिष्ठान

Gyangun Law Academy

# निर्भीक न्यायमुर्ति हरिप्रसाद प्रधान

**जनकलाल शर्मा**

प्रजातान्त्रिक नेपालका प्रथम प्रधान न्यायाधीश हुन् हरि प्रसाद प्रधान। नेपालको प्रजातान्त्रिक न्यायप्रणालीमा जग हाल्ने काम गरेका हुन् प्रधानले। उनी कहाँका व्यक्ति हुन्, धेरै विवाद भयो उनको निधनपछि। कसैले लेखे भक्तपुरमा जन्मेर दार्जीलिंङ गएका हुन् विद्योपार्जनका लागि। सम्भवत: एम. ए. बी. एल. पास गरेर दार्जीलिंङकै अदालतमा आफ्नू कानूनी सेवा अर्पित गरे उनले। निकै नाम चलेको थियो दार्जीलिंङमा हरि प्रसादको। भक्तपुरे कसजु अर्थात् कायस्थज्यू कहलाउने नेवार परिवारका भए पनि आफूलाई प्रधान नै लेखेर चिनाउँथे सिक्किम, दार्जीलिंङको चलन अनुसार। नेवारी भाषा दुई चार पुस्ता पहिले नै छुटिसकेको थियो विभिन्न ठाउँको बसाइँ सराइले गर्दा। त्यसै कारण नेपाली भाषाका कट्टर समर्थक थिए उनी। धार्मिक दृष्टिले सनातनधर्ममा आस्था थियो हरि प्रसादको। पूजापाठ नगरी तृप्ति आउँदैनथ्यो उनको मनमा। अठ्ठार अध्याय गीता कण्ठै थियो उनलाई।

प्रथमत: सिक्किम राज्यका जमिन्दार हुन् हरि प्रसाद। दक्षिणी सिक्किमको रातेपानी भन्ने ठाउँका जमिन्दार हुन् उनी र उनका पुर्खाले अर्जिएको जमिन्दारी हो त्यो। शिक्षा-दीक्षामा पनि ध्यान दिए उनका पुर्खाले अंग्रेजको सम्पर्कका कारणले गर्दा। राम्रो पठन-पाठनको व्यवस्था थिएन त्यस समय सिक्किममा। प्रसिध्द शिक्षा केन्द्रमा विकसित हुँदै गएको थियो दार्जीलिंङ भने अंग्रेजको आगमन पछि। आफ्ना सन्ततिको पठन-पाठनका लागि सुविधा पुर्याउन दार्जीलिंङमा पनि घर बनाए उनका पुर्खाले। उनकै पुर्खाको नामबाट टोलको नाम रहन गयो “हरिदासहट्टा”। हरिदासहट्टा भनेपछि आज पनि प्रसिद्ध छ त्यो ठाउँ दार्जीलिंङको कचहरी रोडमा। अदालतलाई कचहरी भन्ने चलन छ त्यहाँ।

जमिन्दारलाई ठेकेदार भनिन्थ्यो सिक्किममा । काजी, लामा र ठेकेदार नै

हुन्थे धेर धेरै जग्गाका मालिक। अधिकार पनि प्रशस्त दिएको हुन्थ्यो तिनलाई। सोह्रकाजी, अठार लामा र बाउन्न ठेकेदार भन्ने उखानै थियो सिक्किममा। तिब्बतीमूलका हुन् काजीहरू। सिक्किमको राज परिवारसित सम्बन्ध जोडेर कुरा गर्दा गौरवान्वित भएको अनुभव गर्थे उनीहरु। गुम्बामा बस्ने गुरु पुरोहित नै भए बौद्धमार्गीका लागि लामाहरु। तिब्बतीमूलका व्यक्तिबाटै छानिएर दीक्षित हुन्थे लामाहरु पनि केही अपवादलाई छोडेर। तारेथाङ्गका अधिकारी थरका उपाध्याय ब्राह्मण र तिमीतार्कका तिवारी थरका पहाडी छेत्री यी दुई परिवार बाहेक कोही थिएन तागाधारीमा ठेकेदार हुने। धेरैजसो भक्तपुरे कायस्थ अर्थात् कसजु, केही मात्रामा पाटनका शाक्य थिए ठेकेदारमा। शाक्य, कसजु आदि जुनसुकै नेवार परिवारको व्यक्ति त्यहाँ पुगेपछि सबै नेवारको साझा उपाधि थियो प्रधान। भोटे-लाप्चे त हुने नै भए त्यहाँ। केही गुरुङहरु पनि थिए ठेकेदारमा। धेरैजसो ठेकेदारहरु टकसारी कहलाउँठे सिक्किम भारतमा विलय नभएसम्म पनि र एकातिर "श्रीश्रीश्री ३" र अर्कापट्टि लेखिएको हुन्थ्यो "सिक्किम सरकार" भन्ने त्यहाँका पुराना मुद्रामा। तामो धातुका पाइन्थे यस्ता मुद्रा। यस्तै मुद्रा टक काटेर बुझाउनु पर्थ्यो सिक्किमका राजालाई ठेकेदारहरुले। पाटनबाट जाने शाक्यहरुले टक छाप्ने कला पुर्याएका हुन् सिक्किममा। पहिले प्रधान परिवारमा सीमित रह्यो यो कला। पछि गुरुङहरुले पनि सिके टक हान्न। त्यसै कारण सबै टकसारी कहलाए प्रधान परिवार बाहेकका ठेकेदारहरु पनि। रातेपानीका टकसारी हुन् हरि प्रसादका पुर्खा। टक छाप्ने ताँवो आयात गरिँदैनथ्यो बाहिरबाट। सिक्किमकै ठाउँ-ठाउँमा निकालिएको थियो तामोखानी। आज पनि देख्न पाइन्छ पुराना तामाखानीका अवशेषहरु। यस प्रकार चलाएका तामाखानीबाट निकालिएको तामोलाई तोकिएको मात्रामा टक छापेर बुझाउनु पर्थ्यो राजालाई ठेक्काको रुपमा। यसरी ठेक्का बुझाउने व्यक्तिले थुप्रै जमिन पाएका थिए आवाद गरेर त्यस ठाउँमा आफ्ना रैतीको बस्ती बसाउन पाउने गरी यसरी पाएका जमिनको ठेक्का बुझाउनु परेको कारण नै ठेकेदार कहलाएका हुन् उनीहरु। सम्भवत: योंङ हजबेण्ड एक्सपीडिशन पछि ब्रिटिस भारतको संरक्षणमा गाभियो सिक्किम। त्यसपछि ब्रिटिस भारतको मुद्रा लागू भयो त्यहाँ र टक छाप्ने काम गर्नु परेन सिक्किमका टकसारीहरुले। त्यसपछि आफूले बुझाउनु पर्ने ठेक्काको रकम भारतीय मुद्रामै बुझाउन थाले राजालाई

ठेकेदारहरुले। यो क्रम चालू रह्यो सिक्किम भारतमा  पूर्णतया विलय् नभएसम्म।

हरि प्रसाद कहाँ जन्मे खुट्याएर भन्न सकिँदैन अहिले। सम्झत: धेरै पुस्ता अघि उनका पुर्खा भोजपुर पुगेका थिए भक्तपुरबाट जीविकोपार्जनका लागि। हरिप्रसादका पुर्खाले राखेको गुठी अहिले पनि छ अरे त्यस ठाउँमा। दिंलाका अधिकारी परिवारसित राम्रो सम्बन्ध थियो हरि प्रसादका पुर्खाको। भोजपुरबाटै बसाइँ गएका हुन् उनका पुर्खा सिक्किमको रातेपानीमा।  रातेपानीमा मात्र होइन दार्जीलिङमा पनि घर थियो उनको जसको चर्चा भइसकेको छ पहिले नै।  बंगालका गर्भनरको  सदरमुकाम थियो दार्जीलिङ ग्रीष्मकालका लागि अंग्रेजी शासनकालमा। शैक्षिक संस्थादेखि प्रशासनिक अङ्गका सबै कार्यालय दार्जीलिङ आउँथे गर्मीमा र जाडोमा कलकत्ता जान्थे त्यसै गरी। हुने खाने प्रतिष्ठित घरानाका हुन् हरि प्रसाद। उनको परिवार कहिले कलकत्ता बस्थ्यो कहिले दार्जीलिङ र कहिले सिक्किमको रातेपानीमा ।  उनको जन्म कलकत्ता, दार्जीलिङ वा सिक्किमको रातेपानी जहाँ पनि हुन सक्तछ त्यस कारणले गर्दा।  तर नेपालमा भने पक्कै जन्मेका होइनन् उनी।

नेपालले कसरी तान्यो हरि प्रसादलाई, त्यसमा पनि विचार गर्नु पर्दछ हामीले। उनको विवाह काठमाडौं बासी घरानियाँ नेवार परिवारमा भएको थियो राम्रैसित। शिक्षा-दीक्षामा अग्रणी थिए उनका ससुराली पनि।  कुनैपनि नेपालीलाई भारतभन्दा बाहिर समुन्द्रपार जाने अनुमति दिँदैनथे राणाहरु। आफूले सरकारी काजमा खटाएको व्यक्ति बाहेक कसैलाई अनुमति थिएन बाहिर जाने।  अंग्रेजी साम्राज्यभित्र परेका व्यक्तिले सजिलैसित राहदानी पाउँथ्यो भारतबाट।  हाम्रो गणनामा हामी स्वतन्त्र भए पनि ब्रिटिस साम्राज्यको दृष्टिमा स्वतन्त्र थिएनौं हामी। आज्ञा उल्लंघन गरेर समुद्रपार जाने नेपालीलाई जात पतित गराउँथे राणाहरु।  यसरी जात पतित हुनेमा केही राणा पनि परेका देखिन्थे  त्यस समय।  यस्तो कडाइ गरेका बेला पनि हरि प्रसादको एउटा सालो जापान पुगेछ उच्च शिक्षाको अध्ययनका लागि। विद्युत विषयमा स्नातक अर्थात इलेक्ट्रिकल इञ्जिनियरिङ्गमा उत्तीर्ण भएर आयो ऊ। बिना अनुमति समुन्द्रपारको विदेश गएको हुँदा जात पतित गराइयो उनलाई। काठमाडौं उपत्यकामा प्रवेश गर्न पनि निषेध गरियो उसका लागि। काठमाडौं आउँदा र काठमाडौंबाट चार भञ्ज्याङ बाहिर जान पनि राहदानी लिनु पर्थ्यो प्रत्येक पटक प्रत्येक व्यक्तिले।  हरि प्रसादका ससुराली

काठमाडौंका पहुँचवाला परिवार भएको हुँदा देशै निकाला त होइन विराटनगरमा बसोबास गर्ने अनुमति पाए हरि प्रसादका सालाले। यसरी जात पतित गराइएको सालोलाई दार्जीलिङ पुर्याए उनका भिनाजु हरि प्रसाद प्रधानले। जात-भातको मुद्दा अदालतमा दर्ता गरिँदैनथ्यो भारतमा। आपसमा मिलापत्र गर्न आग्रह गरिन्थ्यो सबैसित। नेपाल आएर पतिया लिन्थे भारतमा बसेका नेपालीहरु पनि। पतिया दिँदा केही रकम आय हुने र कानूनले त्यसलाई मान्यता दिएको हुँदा त्यस्तो पतिया दिने काम पनि हुन्थ्यो नेपालका अड्डाखानामा। पतिया लिँदा दुई प्रकारको रकम नेपाली अड्डाखानामा बुझाउनु पर्थ्यो झगडियाले। गोदानका लागि सत्र पैसा र त्यसको दानप्रतिष्ठा भनेर चार पैसाको रकम बडागुरुज्यूको कोशमा जम्मा हुन्थ्यो भने मुद्दा लाग्ने काम गरे वापत एक दुई रुपैयाँ जरिमाना लाग्थ्यो झगडियालाई। जरिमानाको रकम सरकारी कोषमा जान्थ्यो त्यस समय। पतिया र जरिमानाको रकम सानो भए पनि बाहिरी घूसको रकम ठूलो हुन्थ्यो यस्तो भाते मुद्दामा। कतैबाट देखिँदैनथ्यो बाहिरी खर्च तर त्यसैबाट घरबारविहीन भएका पनि देखिन्थे नेपाल र भारतमा बसेका केही नेपालीहरु। हरि प्रसाद कानूनका अनुयायी हुँदा आफ्नो सालोलाई पतिया लिने नै सल्लाह दिए उनले नेपालबाट। पुनः बिन्तीपत्र हाले श्री ३ महाराजका जुनाफमा अनुनय-विनयसाथ पतिया पाउनका लागि। धेरै ठाउँ भनसुन गर्नु पर्यो पतिया पाउने कार्यमा सफलता पाउन। श्री ३ को निगाहबाट पतिया पाउन सफल भए पनि काठमाडौं उपत्यकामा प्रवेश गर्ने अनुमति पाउन सकेनन् उनले। यस घटनापछि विराटनगर नै बस्ने बाध्य भए उनी। विराटनगरको विद्युत केन्द्रको हाकिमीसम्म मिल्यो काठमाडौं उपत्यकामा प्रवेश गर्ने अनुमति नभए पनि। विराटनगरमा बस्न मन लागेन उनलाई काठमाडौं आउने अनुमति नै पाएनन् राणा शासन समाप्त नभएसम्म।

जुनसुकै वर्गको मानिस होस् भातमा अडिएको थियो जात भन्ने वस्तु सम्पूर्ण नेपाली समाजको। भताहाले भात नखाएसम्म जात आउँदैनथ्यो कसैको पनि पतिया नै पाए पनि। मुलुकी ऐनमा भनिएको थियो – “भात खानु नखानु भताहाको खुस”। पतिया पाउनेका सबै दाजुभाइ, इष्टमित्र वा नाताकुटुम्बका भताहाहरु काठमाडौंमा नै थिए उनका। राणा सरकारले काठमाडौं आउन निषेध गरेको हुँदा विराटनगर गएर भात चलाउने हिम्मत गर्न कोही तयार भएनन् उनका भताहाहरु। भताहाले भात नखाई

जातै नआउने उनको। यातायातको असुविधा पनि बाधक भयो उनको भात चलाउने कुरामा।

नेपालका भताहालाई भात खुवाउने मौकै परेन पतिया पाइसकेको भए पनि। पुनः दार्जीलिङ पुर्याएर भात खुवाइदिए उनका हातको हरि प्रसादले त्यहाँका प्रधानहरुलाई। जो गए पनि दार्जीलिङ पुगेपछि सबै नेवार प्रधान कहलाउने हुँदा त्यति महत्व भने दिँदैनथे नेपालका कट्टर नेवारहरु दार्जीलिङे प्रधानलाई जातभातका मामलामा। यिनै कारणले गर्दा दार्जीलिङको खरसाङ भन्ने ठाउँमा जीवन व्यतित गर्न बाध्य भए उनी राणा सरकार नढलेसम्म। हरि प्रसादका ससुराली हुन् डा. जीत सिंह मल्ल र पद्मसुन्दर मल्ल। पद्मसुन्दर मल्ल बाध्यतावश बसे विराटनगरमा पतिया नपाएसम्म। विराटनगरको बसाईमा कोइराला परिवारसित राम्रो सम्बन्ध थियो उनको।

द्वितीय विश्वयुध्द प्रारम्भ हुनुभन्दा पहिलेको कुरा हो यो। पद्मसुन्दरकै सिफारिसमा वकालतको तालिम लिन हरि प्रसाद प्रधानकहाँ गएका हुन् विराटनगरबाट विश्वेश्वर प्रसाद कोइराला पनि। हरि प्रसादकै घरमा बसेका थिए उनी। त्यस समय निकै नाम चलेका अर्का वकिल पनि काम गर्थे हरि प्रसादसित। ज्यादै तीक्ष्ण बुद्धिका मात्र होइन साहित्यमा त्यतिकै हात बसेको थियो उनको। उनबाट नेपालीमा साहित्यिक लेख लेख्ने प्रेरणा मिल्यो विश्वेश्वरलाई। केही कथा त तत्कालै लेखे कोइरालाले दार्जीलिङमा बस्दा। आफूले धेरै आदरसाथ मानिआएका व्यक्ति थिए हरि प्रसाद नै उनका लागि। यस विषयमा ज्ञवालीसित सल्लाह लिने प्रस्ताव राखे प्रधानले। नेपाली साहित्य सम्मेलनका नाताले आपसमा घनिष्टता थियो सुर्य विक्रम ज्ञवाली र हरि प्रसाद प्रधानको। विश्वेश्वरका सबै कथा पढे ज्ञवालीले र कतै प्रकट नगर्ने गरी अर्को व्यक्तिलाई हेर्न दिए उनले। मूल कापीमा कतै चिनो नलगाई आर्कै कापीमा त्यसको यथार्थ टिप्पणी गर्न अर्हाए ज्ञवालीले आफू विद्यार्थी जस्तै गरेर। त्यसको पूरै टिप्पणी गरे ती व्यक्तिले। त्यसै अनुरुप आफ्ना कृति सुधार्न भने ज्ञवालीले विश्वेश्वरलाई आफ्नै तर्फबाट। अर्काले कापी हेरेको थाहै भएन कोइरालालाई। ज्ञवालीकै आज्ञा बमोजिम सुधार गरे आफ्ना कथाहरुमा। त्यसको फलस्वरूप पहिले केही कथा “कथा कुसुम” मा र त्यसपछि छापियो “दोषी चश्मा” पनि। यी अर्का प्रखर व्यक्तित्व थिए रुपनारायण

सिंह। रुपनारायण सिंहले पढेर सुधार्ने सल्लाह दिएको पत्तै भएन विश्वेश्वर प्रसाद कोइरालालाई। दार्जीलिङको वकालतमा राम्रो पयर जमाउन सकेनन् विश्वेश्वरले । त्यसै कारण दार्जीलिङ बाट पुनः काशीतिरै गए उनी।

कोतपर्व रचेर राणा वंशको शासनको जग हाल्ने व्यक्ति हुन् जंगबहादुर कुँवर। सात भाई थिए उनीहरु। तिनमध्ये एक भाई हुन् धीर शमशेर। धीर शमशेरका छोरा थिए जम्मा सत्र भाई। सत्र भाईमध्ये कान्छा हुन् जुध्द शमशेर। नेपालमा करीब चौध वर्ष शासन गरे उनले। आफ्ना पुर्खा धीर शमशेरका नाउँमा एउटा कीर्ति राख्ने संकल्प गरे उनले। त्यो कीर्ति कहाँ राख्ने निर्णयमा आउन सकेनन् पहिले। इलामको कुनै सुगम ठाउँमा राख्न उपयुक्त हुने सल्लाह आयो कतैबाट। गोर्खे भन्ने ठाउँमा भन्सार अड्डा पनि थियो त्यस समय र राम्रै आय हुन्थ्यो त्यहाँ। गोर्खे भन्सारलाई नेपाल र भारतको सिमानामा पर्ने चारकटेरी नामक स्थानमा सार्ने सुझाव पनि आयो कसै कसैको। सुन्तलेका अधिकारी, माघेका भट्टराई, करफोक फिकलका ढुंगाना र गैह्री गाउँका पराजुलीहरुको बर्खे गोठ राख्ने ठाउँ हो चारकटेरी नामक जंगल। चार ओटा बर्खे गोठका कटेरा भएकै कारण चारकटेरी नामाकरण भएको हो जनताबाट त्यसको। जंगलमा भन्सार सार्ने कुरै भएन त्यसै। प्रथम विश्वयुध्दमा सहभागी भएर नेपाल फर्केका भूतपूर्व सैनिकको परिवारलाई बसोबास गराइयो पहिले जंगल फँडानी गरेर। चारकटेरीको नामाकरण गरियो पशुपतिनगर भन्ने। कसैले चारकटेरीको नाम लिन पाउँदैनथ्यो त्यस समय। आज्ञा उल्लंघन गर्नेलाई छ मासको कारावास तोकियो ढोल पिटीपिटी। इस्तिहार पनि तयस्तै टाँसिएका थिए जताततै। यसै नगरमा राख्ने विचार भयो धीर शमशेरको स्मारक।

जुद्ध शमशेरका छोरा जनरल बहादुर शमशेर खटिए यस कामका लागि। ठूलो शिव मन्दिर बनाउने योजना मनमा थियो जुद्ध शमशेरको। दार्जीलिङमा एउटा घरै किनेर बसेका थिए बहादुर शमशेर त्यस समय ग्रीनरीजका छेउमा। स्थानीय इष्टमित्रसित पनि सल्लाह गरे बहादुर शमशेरले। इलाम जिल्लाको चारकटेरी नामक जंगलमा लगेर राख्नुभन्दा दार्जीलिङमै राख्न पाए राम्रो हुन्थ्यो त्यो प्रस्तावित शिवमन्दिरको स्मारक भन्ने सुझाव आयो दार्जीलिङका ख्यातिप्राप्त व्यक्तिहरुबाट। धेरै नेपाली जनता उपकृत हुने थिए नेपालप्रति भन्ने पनि कुरा आयो त्यहाँ। त्यसका

निमित्त चाहिने जग्गा पनि उपयुक्त ठाउँमै देखाए सबैले। त्यस कामका लागि चाहिने अनुमति दिलाउन ब्रिटीस भारतसित पैरवी गर्ने भार पनि लिन तयार भए दार्जीलिङ बासी भद्रभलादमीहरु। त्यसमा अग्रणी भूमिका थियो हरि प्रसाद प्रधानको। सुर्य विक्रम ज्ञवाली, धरणीधर कोइराला र पारसमणि प्रधानले पनि साथ दिए त्यसमा।

दार्जीलिङको प्रसिध्द ठाउँ रेलवेस्टेशनकै छेउमा खोजे जग्गा पनि चाहिए जति उनीहरुले। धीर शमशेरका नाममा बन्ने स्मारक त्यहीँ बन्ने भयो पशुपतिनगरको साटो। गोर्खेको छोटी भन्सार आयो पशुपति नगरमा। मन्दिर भने बनेन चारकटेरीमा पशुपतिकै नामबाट नगरको नाम रहन गए पनि। विक्रम संवत् उन्नाइसौं पञ्चानब्बे सालमा प्रतिष्ठापित भयो धीर शमशेरका नाममा बनेको धीरेश्वर महादेवको। नेपालको पशुपतिनाथ मन्दिरकै अनुकृतिमा बन्यो नेपाली शैलीको मन्दिर त्यहाँ पनि र नामाकरण भयो त्यसको धीरधाम भन्ने। दुई जना पुजारीको व्यवस्था भयो प्रमुख र सहायकका नामले। नेपालका बडागुरुज्यूको सिफारिसमा संस्कृत शिक्षातर्फबाट छानिन्थे त्यस्ता पुजारीमा जान। प्रमुखको योग्यता तोकिएको थियो घटीमा मध्यमा। त्यसै प्रकार सहायकको योग्यता तोकिएको थियो घटीमा प्रथमा हुनै पर्ने। प्रमुख पुजारीको तलब थियो मासिक पच्चीस र सहायकको पन्ध्र रुपैयाँ। बस्ने घर धीरधामले नै दिन्थ्यो उनीहरुलाई। गुठी सञ्चालनका लागि एउटा समिति बनेको थियो स्थानीय भद्रभलादमीको। धार्मिक दृष्टिले आफ्नापना छोडेका थिएनन् प्रवासमै गएर बसे पनि नेपालीहरुले। नेपाली ब्राह्मणनै चाहिन्थ्यो त्यहाँ बसेका हिन्दू धर्मावलम्बी नेपालीलाई। पुरोहितको अनिकाल पनि टार्ने भए ती दुवै धीरधामका पुजारीले।

आफ्ना सालाका लागि पतिया लिन साह्रै कष्ट परेको अनुभव गरेका थिए हरि प्रसाद प्रधानले। पतिया दिने काम हुन्थ्यो पहिले चर्चा गरिए जस्तै नेपालको धर्माधिकारी कार्यालयबाट। नेपालका बडागुरुज्यूका मातहतमा पर्थ्यो धर्माधिकारी कार्यालय। धर्माधिकारी कार्यालयको एउटा शाखा कार्यालय दार्जीलिङमा पनि रहनु पर्छ भन्ने अनुरोध आयो सबैबाट। धीरधामका पुजारी बाहेक एउटा धर्माधिकारी पनि खटाइने व्यवस्था भयो नेपालबाट। नेपालीमूलका हिन्दू धर्मावलम्बीहरुले दार्जीलिङबाटै पाउने व्यवस्था भयो पतिया पनि नेपालको धर्माधिकारीकातर्फबाट। पहिलो धर्माधिकारीमा नेपालका बडागुरुज्यूबाट नियुक्ति भयो इलाम निवासी पण्डित

भवानीशंकर उपाध्याय काफ्लेको। धर्माधिकारीका लागि घटीमा शास्त्री परीक्षा उत्तीर्ण भन्ने थियो योग्यता। मासिक तलब तोकिएको थियो घर भाडा बाहेक सय रुपैयाँ। धर्माधिकारीको पहिलो कार्यालय खुल्यो दार्जीलिङको रेलवेस्टेशन र धिरधामको बीचमा पर्ने सिंह बिल्डिङ नामको एउटा घरमा। पाँच-पाँच वर्षमा छानिन्थे धर्माधिकारी। पण्डित भवानी शंकरको म्याद समाप्त भएपछि उनको ठाउँमा गए चैनपुर निवासी देवीप्रसाद उपाध्याय काफ्ले। दुई हजार सात सालको परिवर्तनपछि स्वत: खारेज भयो दार्जीलिङमा धर्माधिकारी खटाउने व्यवस्था। धिरधामको स्वामित्व पनि छोड्यो नेपालले त्यसै समयदेखि। भारतीय श्रध्दालुको ट्रस्टमा चलेको छ धीरधाम आजकाल। बेलम्बर इस्टेटको जग्गा मन्दिरकै नाममा छ आज पनि। त्यसमा बनेका घरबाट पनि केही आय हुन्छ धिरधामनामक मन्दिरलाई। अल्पायुमै टुहुरो हुनुपर्यो यसले नेपाल र भारतमा राजनीतिक परिवर्तन भएका कारण।

*"अधित्यकायामिहदाजीलिङे*
*धीरेश्वर: स्थापित एष देव:"।*

भन्ने वाक्य आज पनि टाँसिएको देखिन्छ धीरधाम नामक मन्दिरका भित्तामा टाँसिएको एउटा शिलापत्रमा हेर्यो भने।

धीरधामको स्थापनापछि अनेक घटना घटे भारत र नेपालमा। पराधीन भारत स्वतन्त्र भयो अंग्रेजी उपनिवेशबाट। त्यसको प्रभाव पर्ने नै भयो नेपालमा पनि। राणा कांग्रेस दिल्ली सम्झौता भयो सात सालको आन्दोलनपछि। त्यसै सम्झौता अनुसार राणा कांग्रेस मन्त्रिमण्डल बन्ने भयो नेपालमा पनि। फागुन सात गतेको शाही घोषणा भयो श्री ५ त्रिभुवनबाट दुई हजार सात सालमा। नेपालको सम्पूर्ण शासन श्री ३ को हुकुममा चलेको हुँदा आधुनिक शासन प्रणालीका पूर्वाधार केही थिएनन् त्यस समय। ऐन कानूनका नाममा पाँच भाग मुलुकी ऐन थियो त्यसको उपचारका लागि। अप्ठ्यारो जतिमा श्री ३ को तजबिज भनिएको थियो जताततै। श्री ३ को व्यवस्था खारेज भयो शाही घोषणाले। न्याय सेवाका केही कर्मचारी र कार्यालय थिए न्यायालय, अपील र प्रधान न्यायालय आदिका नामले। तर कानून पर्याप्त थिएनन् नयाँ वातावरणसित मेलखाने खालका। आफ्ना सुपरिचित मित्र हरि प्रसाद प्रधानलाई काठमाडौं बोलाए विश्वेश्वर प्रसाद कोइरालाले आफू गृहमन्त्री भएकै समय। दुई हजार आठ सालको

प्रारम्भमै बोलाइएको थियो न्याय व्यवस्था सुदृढीकरण र सुधार कार्यका लागि हरि प्रसाद प्रधानलाई। उनको नियुक्ति आठ सालमै भए पनि लालमोहर लागेर काम गर्न थाल्दा नौ साल वैशाखसम्म कुर्नु पर्यो उनले।

सात सालपछि हरि प्रसाद सर्वप्रथम काठमाडौं आउँदा साथमा उनकी श्रीमती, जेठा छोरा अरुणचन्द्र प्रधान र कान्छा छोरा तिलकचन्द्र प्रधान आएको थाहा छ मलाई। सर्वप्रथम शशिभवन पुलचोक त्यसपछि सत्यभवन टंगाल र अन्त्यमा पाटन जुध्दवारुण कार्यालयको छेउ जाउलाखेलनेर बसेका थिए उनी। हरि प्रसाद शशिभवन बसेकै समय अर्थात दुईहजार आठ सालमा अखिल भारतीय नेपाली छात्र सम्मलेन भएको थियो शशिभवनमा नै। सम्भवतः इलाहावादबाट जगदीश शमशेर राणा, बनारसबाट पीताम्बरध्वज खाती र दार्जीलिङबाट नारदमुनि थुलुङकी भतिजी रत्ना राईले प्रतिनिधित्व गरेका याद छ मलाई आज पनि। तिनै रत्ना राई रत्ना लामिछाने अर्थात श्रीमती शंकर लामिछाने भइन् पछि।

हरि प्रसाद प्रधानको नेपाल बसाइँमा धेरै राजनीतिक उथलपुथल भए पछि। सात साल फागुन सात गते भएको शाही घोषणाले निकै विवाद ल्यायो राजा, नेपाल-प्रजापरिषद् र नेपाली कांग्रेसका बीचमा। शाही घोषणाको मसौदा भएको थियो भारतका तत्कालनि प्रधानमन्त्री पण्डित जवाहरलाल नेहरुकै निर्देशनमा उनैका कानुनविद्हरुले पेश गरे बमोजिम श्री ५ त्रिभुवन दिल्ली सवारी भएकै समय। गणतन्त्रात्मक भारतका कानुनविद्हरुले मसौदा गर्दा केही दृष्टि नपुगेको हुन सक्तछ त्यसमा। प्रतिनिधि सभाका लागि निर्वाचन हुनेछ भन्नु पर्नेमा संविधान सभाका लागि निर्वाचन हुनेछ भन्ने वाक्य परेको थियो शाही घोषणामा। त्यसमा राजालाई आपत्ति भयो पछि। संविधान सभाका लागि निर्वाचन भएमा राजाको स्थान कस्तो हुन्छ त्यसको निर्णय गर्ने अधिकार जाने थियो संविधान सभाका लागि निर्वाचित भएर आउने प्रतिनिधिका हातमा। गणतन्त्रात्मक संविधान पनि बनाउन सक्तथे उनीहरुले। हुकुम भइसकेको कुरा फिर्ता लिने कुरा पनि भएन त्यसै। यसै मौकामा निकै अस्वस्थ भए श्री ५ त्रिभुवन पनि। दुई हजार एघार साल फागुन तीस गते निधन पनि भयो उनको। शाही धोषणालाई अमान्य गर्ने कुरामा राजाको पूर्ण समर्थन गर्यो नेपाल प्रजापरिषद्ले। संसदका लागि निर्वाचन हुनु पर्दछ भन्ने अडान लिइयो प्रजापरिषद्का

तर्फबाट । शाही घोषणा अनुसार विधान सभाकै लागि चुनाव हवस् भन्ने पक्षमा गयो नेपाली कांग्रेस । संसदकै लागि निर्वाचन हुनेछ भनेर प्रचार पनि गर्न थाल्यो श्री ५ को सरकार । त्यसको विरुद्धमा रिट दिए नेपाली काँग्रेसका नेता विश्वेश्वरप्रसाद कोइरालाले । यस बीच थेरै मुद्दा हारिसकेको थियो सरकारले जतिसुकै बलमिच्याई गर्न खोजे पनि । मृगेन्द्र शमशेर र भरत शमशेरलाई थुनेरै तह लगाउन चाहन्थ्यो सरकार । वाकीटकी आयात गरेको मुद्दामा थुनिए दुवै बाबु छोरा । प्रधान न्यायालयमा न्याय माग्न पुगे उनीहरु । ट्राय बाकीटकी मगाएका रहेछन् आफ्ना परिवारिक उपयोगका लागि । त्यसमा पनि हार्यो श्री ५ को सरकार । न्याय सेवाको शिर उच्च राख्ने पक्षमा थिए हरि प्रसाद प्रधान । न्याय सेवाको निन्दा पटक्कै सहन गर्दैनथे उनी । कानूनी रुपमा साह्रै निष्पक्ष थिए हरि प्रसाद प्रधान । सरकार भने मिचेरै काम गर्न चाहन्थ्यो जहिले पनि । सरकार मात्र होइन नेताहरु पनि बिना लगामका घोडा जस्ता थिय त्यस समय । न्यायालय कानमा तेल हालेर सुतेको छ भन्ने कुरा छापेका थिए एउटा बुलेटिन नामको पत्रिकामा डा. डिल्लीरमण रेग्मीले । न्याय सेवाको अपमान गरे बापत छ महिना कारावासको सजाय भोग्नु परेको थियो उनले त्यस समय ।

श्री ५ त्रिभुवनबाट शाही घोषणा भइसकेको हुँदा संविधान सभाकै पक्षमा निर्णय जाला भन्ने ठूलो डर भयो राजा र नेपाल प्रजापरिषद्लाई । प्रजापरिषद्को सल्लाहमा प्रधान न्यायालय नै खारेज भयो र सर्बोच्च अदालत नामाकरण भयो प्रधान न्यायालयको । प्रधान न्यायालय नै खारेज भएपछि प्रधान न्यायधिस हरि प्रसाद प्रधान स्वत: खारेजीमा परे त्यहाँ । पुनर्नियुक्ति नपाई बहाली गर्ने कुरै आएन उनले । अनिरुध्द प्रसाद सिंहले नियुक्ति पाए रिक्त रहेको सर्वोच्च अदालतको प्रधान न्यायाधीश पदमा । पुन: पेश भयो नयाँ प्रधान न्यायाधीश समक्ष शाही घोषणाको मुद्दा । । यसमा लालमोहर नै नलागेको हुँदा कानूनी रुपमा वैध छैन यो शाही घोषणा भन्ने तर्क दिए उनले र त्यो मुद्दानै खारेजीमा पर्यो कानूनी रीत नपुगेको हुँदा । त्यसैको पुरस्कार प्रधानमन्त्री पाए टंकप्रसाद आचार्यले राजाबाट ।

यसरी षड्यन्त्रबाट मुद्दा जितेपछि प्रजातन्त्रलाई खेलौना बनाउन थाल्यो दरबारले । दुई हजार चौध सालमा भद्र अवज्ञा आन्दोलन गर्यो नेपाली कांग्रेसले । केही व्यक्ति बाहेक तपेका कार्यकर्ता वा नेता पनि थिएनन् नेपाली कांग्रेससित । सबैले

पालो बाँधेक थिए भद्र अवज्ञा आन्दोलनमा जान। प्रहरीसंग भिड्नु पर्ला भन्ने डरले आज वेदर ठीक छैन त्यस कारण आज म जान सक्तिन भने त्यहाँ जाने पालो परेका डा. तुलसी गिरीले र वि.पि. आफैले नै भाग लिए त्यस दिन तुलसी गिरीको पनि काम खप्टिएर। यस्तै मनोवृत्तिले गर्दा जिनतिन कम चल्यो भद्र अवज्ञा आन्दोलनको। बेलायतका संविधानविद् सर आइवर जेनिङगलाई साक्षी राखेर आफू अनुकूल संविधान बनाउन लगाए राजाले, जसको परिणाम राम्रो भएन पछि।

दुई हजार पन्द्रसालमा आम निर्वाचन भयो संसद्का लागि । एक सय नौ स्थानमध्ये चौहत्तर स्थानमा जित्यो नेपाली कांग्रेसले। संसदीय दलका नेता चुनिए विश्वेश्वर प्रसाद कोइराला। जम्मा उन्नाइस स्थानमा विजय प्राप्त गर्ने राष्ट्रवादी गोर्खा परिषद्ले मौका पायो विरोधी पक्षको आसनमा बस्ने। दुई हजार सात सालदेखि पञ्चायत व्यवस्था लागू नभएसम्म प्रधान न्यायाधीशबाट शपथ ग्रहण गराउने चलन थियो श्री ५ को समुपस्थितिमा नयाँ मन्त्रिमण्डलको गठन भएका बेला प्रधानमन्त्रीको। विश्वेश्वर प्रसाद कोइराला प्रधानमन्त्री हुने भए नेपालको। निकट भविष्यमै शपथ गर्नु थियो प्रधानमन्त्रीको नाताले। श्री ५ महेन्द्रसँग एउटा प्रस्ताव राखे विश्वेश्वर प्रसाद कोइरालाले शपथ ग्रहण गर्नुभन्दा पहिले। अनिरुध्द प्रसाद सिंहले कहिल्यै कानून पढेनन् औपचारिक रुपमा। साधारण ग्य्राजुयटका हातबाट शपथ ग्रहण गर्न असजिलो पर्यो म जस्तो कानूनको स्नातकलाई पनि भने उनले। अयोग्य व्यक्तिलाई हटाउनु पर्यो न्याय सेवाबाट भन्ने जिकर गरे राजासित। त्यत्रो बहुमत ल्याएर चुनाव जित्ने पार्टीको नेतालाई हुँदैन भन्न पनि सकेनन् राजाले त्यस समय। सम्भवत: लोकसेवा आयोगको अध्यक्षमा पठाइए अनिरुध्द प्रसाद सिंह तत्काले त्यसपछि। भगवती प्रसाद सिंह कायममुकायम मुकर्रर भए प्रधान न्यायाधीशको रिक्त रहेको आसनमा। त्यसपछि मात्र शपथग्रहण गरे विश्वेश्वर प्रसाद कोइरालाले प्रधानमन्त्रीको रुपमा। त्यसको तुस कहिल्यै गएन श्री ५ महेन्द्रका मनबाट। राजाका मनमा ठूलो चोट पर्यो होला भन्ने अनुभव त गरेका थिए विश्वेश्वर प्रसाद कोइरालाले पनि। त्यसको प्रतिक्रिया व्यहोर्न तयारै थिए उनी। प्रतिक्रिया कहिले आइलाग्दछ त्यो भने अन्दाज गर्न सकेका थिएनन् विश्वेश्वर प्रसाद कोइरालाले। अन्तत: सत्र साल पौष एक गते पनि आइहाल्यो डेढ वर्षभित्रै। अप्रत्यक्ष रुपमा सत्र सालको घटनाका प्रमुख कारकतत्त्वमध्ये

एक थिए हरि प्रसाद प्रधान पनि  अस्तु ।
छ  २/१८९, रानीपोखरी
मिति २०५४/१/१९/५
महाराजगञ्ज, काठमाडौँ
नेपाल ।

# प्रधान न्यायाधीश हरि प्रसाद प्रधानका सम्झनामा

**प्रचण्डराज अनिल**

राजनेताको हामी सम्मान गर्दछौं, दिवसको आयोजना गरिन्छ किनकि ती नेताले राष्ट्रको उत्थानमा केही योगदान गरेका हुन्छन् । न्यायमूर्तिको सम्झना गर्दछौं, तिनको सम्मान गर्दछौं किनकि न्याय सम्पादनमा गहिरो छाप छाडेको हुन्छ । भनिन्छ न्यायाधीश मर्दैन तिनले गरेका फैसलामा तिनी बाँची रहेका हुन्छन् । प्रधान न्यायाधीश हरि प्रसाद प्रधान, न्यायमूर्ति मार्शल झैं, चिरस्मरणीय रहनु भएको छ ।

वेदकृष्ण श्रेष्ठ विरुध्द उद्योग वाणिज्य खाद्य सिभिल सप्लाइज भएको मुद्दामा प्रधान न्यायाधीश हरि प्रसाद प्रधान समेत भएको फुल बेञ्चबाट कानूनको शासनका सम्बन्धमा सिद्धान्त प्रतिपादित भएको छ । कानूनको सर्वोपरिताका सम्बन्धमा दृढता व्यक्त भएको छ । सरकारी कर्मचारीलाई पनि सामान्य कानून नै लाग्छ । छुट्टै ऐन एवं अदालत (एडमिनिष्ट्रेटिभ ट्राइवुनल) को प्रश्न उठ्दैन ऐन बमोजिम राज्यको काम भएको छ छैन भनि विचार गर्ने काम न्यायालयको हुन्छ । प्रजातान्त्रिक देशमा राज्यको विधानको संरकक्ष न्यायालयलाई मानी आएको छ । राजाबाट केही अन्याय हुँदैन तर अरु माथि कानूनी कारवाही चलाउन पाउने नेपालको नागरिकलाई हक छ – भन्ने सिद्धान्त प्रतिपादन भएको छ । (नि. नं . ४७, ने.का.प. २०१६, पृष्ठ ३४ )

विश्वेश्वर प्रसाद कोइराला विरुद्ध गृह मन्त्रालय भएको मुद्दामा प्रधान न्यायाधीश हरि प्रसाद प्रधान समेत भएको इजलासबाट नेपाल सार्वजनिक सुरक्षा ऐन, २००७ अन्तर्गत कारण नखुलाई विधान प्रदत्त अधिकारमा बाधा पर्ने गरी आदेश दिन मिल्दैन र सरकारबाट अधिकार पाएको व्यक्तिले मात्र प्रयोग गर्न पाउने त्यस्तो अधिकार पत्र नभई गरेको काम अधिकार बाहिरको काम गरेको ठहर्छ भनि थुनुवालाई छडी दिने आदेश भएको छ । (नि.मि. २०१० कार्तिक २६ गते, नि.नं. २३, ने.का.प. २०१६, पृष्ठ

११५) त्यस्तै निवेदक मृगेन्द्र शमशेर विरुद्ध आई.जी.पी. भएको वेरितसँग थुने भन्ने मुद्दामा पेश भएका मिसिल कागजहरु हेर्दा राजकाजको ४३ दफामा उल्लेख गरिएका अपराधसँग सो माथि पुलिसले लगाएको अभियोग मिल्न नआएकोले यत्तिकैबाट समष्टि रुपबाट पनि राजकाज मुद्दा भन्न नमिल्ने हुँदा थुनामा रहनु भएको श्री ले.ज. मृगेन्द्र शमशेरलाई छाडी दिनु भन्ने निर्णय भएको छ साथै तत्कालीन आई.जी.पी. लाई नासिहद दिइएको थियो। (नि.मि. २०११/३/३१/५, बन्दीप्रत्यक्षीकरण निर्णय संग्रह भाग १, पृष्ठ ५२४, प्रकाशक नेपाल कानून समाज)।

यी फैसलाहरूको पृष्ठभूमिमा तत्कालीन श्री ५ को सरकारका कार्यालयहरु र प्रधान न्यायालयका बीच तालमेल खान सकेन। प्रधान न्यायालय ऐन पटक-पटक संशोधन भएको थियो। उपत्यकाञ्चल कमिश्नर विरुद्ध टुलुकनाथ भएको मुद्दामा प्रधान न्यायाधीश हरि प्रसाद प्रधान समेत भएको फुल बेञ्चबाट टुलुकनाथजीलाई हाजिर जमानीमा राखी कारवाही गर्नु भन्ने फुल बेञ्चको आदेशका विषयमा कमिश्नरले टिका टिप्पणी गर्नु भएको नेपाल अन्तरिम विधानको प्रतिकूल देखिन्छ। नेपालमा प्रजातन्त्रको शैसव अवस्था भएकोले सबै कर्मचारीहरुलाई भइरहेको न्यायपालिकाको प्रजातान्त्रिक व्यवस्था बोध भई नसकेको कमिश्नर उपर केही कानूनी कारवाही नगरी कमिश्नरले प्रधान न्यायालयको आदेश पालना गराउनका लागि गृह न्याय मन्त्रालयमा लेखी पठाउनु भन्ने निर्णय भएको छ। (बन्दीप्रत्यक्षीकरण निर्णय संग्रह, भाग १, पृष्ठ १००, ने. का. स.)।

निवेदक रणधीर सुब्बा विरुद्ध काठमाडौँ मजिष्ट्रेट भएको मुद्दाको निर्णयबाट तत्कालीन प्रशासन र प्रधान न्यायालय बीच द्वन्द भएको झल्किन्छ। सो मुद्दामा गृह मन्त्रालयका वेकानूनी आदेशले थुनुवा हाजिर नगराएकोले थुनुवाको उजुरी सुन्न प्रधान न्यायालयलाई बाधा परेको हुनाले थुनुवा हाजिर गराउने विषयमा श्री ५ महाराजाधिराजमा जाहेर गरी पठाउने र निकासा भए बमोजिम कारवाही गर्ने गरी हाल थुनुवाको उजुरी स्थगित राख्नु भन्ने निर्णय भएको देखिन्छ। (नि.मि. २०११ भाद्र २५ गते, बन्दीप्रत्यक्षीकरण निर्णय संग्रह, भाग १, पृष्ठ ३९, प्रकाशक ने.का.स.)।

प्रधान न्यायालय ऐन, २००८ खारेज भई सर्बोच्च अदालत ऐन, २०१३ जारी भयो जस अनुसार प्रधान न्यायाधीश हरि प्रसाद प्रधानको कार्य अवधि स्वत: समाप्त

भयो । प्रधान न्यायाधीश हरि प्रसाद प्रधानले प्रधान न्यायाधीशको पद गुमाउनु पर्ने कारणहरुमा – (१) प्रधान न्यायालयका फैसलाहरुमा तत्कालीन प्रशासनले चित्त बुझाउन सकेन (२) प्रधान न्यायालयले तत्कालीन राजनैतिक उथल पुथलको पहिचान गर्न सकेन तथा (३) मुख्य कुरा कानूनको शासनको सिध्दान्तले जरो गाड्न सकेको थिएन ।

प्रधान न्यायाधीश हरि प्रसाद प्रधानको दोस्रो कार्यावधिमा पञ्चायती राजनीतिले प्रभाव पारी सकेको थियो । शारीरिक अस्वस्थताको शुरुआत भइसकेको थियो । गणेश बहादुर विरुध्द डी. एस. पी. अफिसको बन्दीप्रत्यक्षीकरण निवेदनमा सार्वजनिक सुरक्षा ऐन, २०१८ अन्तर्गत नजरबन्द राखेको भन्ने देखिँदा यो निवेदनबाट आम कारवाही गर्नु पर्दैन भन्ने प्रधान न्यायाधीश हरि प्रसाद प्रधानबाट निर्णय भएको छ । (बन्दीप्रत्यक्षीकरण निर्णय संग्रह, भाग २, पृष्ठ ३३, ने.का.स.) । सर्बोच्च अदालत भवनको उदघाटन समारोहको अवसरमा प्रधान न्यायाधीश हरि प्रसाद प्रधानबाट व्यक्त भएको उद्गार उद्धृत गर्दछु:

“नेपालले पाश्चात्य सभ्यताको अनुकरण गरी तत्त्वदर्शी आर्य ऋषिहरुले देखाएको बाटामा नलागी आफ्नो संस्कृति नबुझी पाश्चात्य मायावी भौतिक चकचकीमा मुग्ध भई त्यसैको नक्कल गर्नु कहाँसम्मको मुर्खता हो । समयले पल्टा खाने वेला धेरै टाढा छैन । हामीले हाम्रो आर्य संस्कृति बुझि सोही प्रकार गरे पाश्चात्य देशले हाम्रो अनुकरण गर्नु पर्ने छ यही ध्येय राखी हामीले काम गर्नुछ । हामीले नक्कली हुनु आर्य संस्कृतिरुपी हीरालाई छोडी काँच अपनाउनु हो ।

कानूनी राजको सिद्धान्तको आडमा केवल ऐनको व्याख्यामा निर्भर गर्नाले न्याय पर्न नगएको अनुभवको विषय हो । अब न्याय कस्तो के हो भन्ने प्रश्नको समाधानको लागि तत्त्वदर्शी आर्य ऋषिहरुले तत्त्वको अनुसन्धान गरी ठहराएको मौलिक सिद्धान्तहरुका आधारमा नै निर्णय न्यायसंगत देखिन्छ ।

प्राचीनकालदेखि प्रजालाई न्याय प्रदान गर्ने काम आर्य संस्कृति अनुसार राजाको कर्तव्य हो भन्ने पुराण आदिले दर्शाएको छ । सोही राजामा निहित अधिकार श्री ५ बाट सर्वोच्च अदालतलाई नासो सरह संविधानद्वारा प्रदान गरी बक्सेको छ र वर्तमान न्याय व्यवस्थामा सर्वोच्च अदालतले सर्वश्रेष्ठ स्थान पाएको छ । यसको संवैधानिक

स्थिति छ । यस्ता पवित्र नासोको सद्व्यवहार गर्नु न्यायाधीशको कर्तव्य हो ।

श्री ५ महाराजाधिराज महेन्द्र वीर वीक्रम शाहदेव सरकारबाट कानूनी राज कायम हुनुपर्छ भनि हुकुम बक्सेको थियो । नेपालमा पूर्ण कानूनी राज कायम हुनुपर्छ र देशका कानून वेत्ता र सर्वसाधारण जनताको समेत सहयोग भएमा यो अवश्य हुन्छ पनि यसमा म निश्चित छु यो कुरालाई सफल पार्न सर्वोच्च अदालतले इमान्दारीपूर्वक स्वतन्त्र रुपले महत्वपूर्ण योगदान गर्नुपर्छ । (ने.का.प. २०१९, पृष्ठ ४) ।

## निष्कर्ष

कार्यालयहरूका पदमा व्यक्ति आउँछ व्यक्ति जान्छ त्यो महत्वपूर्ण कुरा हैन, पदको मोहमा पर्नु वा पदका लागि आतुर रहनु त्यो पनि विशेष कुरा हैन, कुन व्यक्तिले कस्तो योगदान दियो कस्तो आदर्श कायम गर्यो त्यसको लेखाजोखा हुन्छ । प्रधान न्यायाधीश हरि प्रसाद प्रधानले कानूनको सर्वोपरिताको सिद्धान्तलाई व्यवहारमा उतार्नु भएको थियो सम्मान र सम्झनाका लागि त्यो बुँदा नै म पर्याप्त ठान्दछु ।

# स्वर्गीय हरि प्रसाद प्रधान एक चिन्तन – एक दर्शन

**प्रकाश वस्ती**

प्रधान न्यायालय ऐनमा लालमोहर लागेको दिन २००९/१/२६ लाई स्वतन्त्र न्यायपालिकाको जन्मदिन मानिएबाट पाँच वर्षपछि हाम्रो स्वतन्त्र न्यायपालिकाले अर्द्ध शताब्दी पूरा गर्ने छ। २०५९/१/२६ गते भव्य भोज हुनेछ, प्रखर भाषण हुनेछ र प्रचुर आत्मप्रशंसा हुनेछ। तर यी पचास वर्षमा कतिवटा हरि प्रसाद प्रधान नेपालको न्यायपालिकाले पायो सम्भवत:चर्चा हुने छैन। कारण हामी बलेको आगो ताप्न अभ्यस्त जाति हौं, हामी चढ्दो सूर्यलाई तर्पण दिएर धर्म संगाल्ने वर्ग हौं।

विगत ४५ वर्षको न्यायपालिकाको इमान्दारीपूर्वक मुल्यांकन गर्ने हो भने हामीले आवरणमा विकास गरेका छौं, आत्मामा होइन, हामीले भौतिकतामा उन्नति गरेका छौं, बौद्धिकतामा होइन। आचरणमा शुद्धता हाम्रो प्राथमिकता होइन, "माननीय" भन्ने पदवी स्वयं ग्रहण गर्नु हाम्रो आवश्यकता हो। वरिष्ठ अधिवक्ताको उपाधि योगदान र सम्मान होइन गद्दी आरोहणको रजत वर्ष मनाउने माध्याम हो।

स्व. हरि प्रसाद प्रधानको अभिलेख अदालतरुपी सिर्जनालाई अत्यन्त ओजस्वी तुल्याउन हामीले नियन्त्रणका सम्पूर्ण जंजीर चुँडाएर फ्याक्यौं, दुर्भाग्यवश आत्मनियन्त्रणको झिनो धागो पनि रछ्यानमा मिल्किएछ, हरि प्रसाद प्रधानको निर्भिक न्यायपालिकारुपी उपहारलाई परिस्कृत गर्न, संसारभरिका सुन्दर यन्त्रहरू समावेश गरेर एउटा गाडी बनायौं। तर हतारमा ब्रेक राख्न नै भुलिएछ। आज यही ब्रेकविहिन गाडी आरोह/अवरोहको मार्गमा अनेकौं खाडल र घुम्तिहरुमा सम्भावित दुर्घटनारुपी त्रासको भारी बोकेर कुदिरहेको छ। हामी त्यही अभिसप्त गाडीका यात्रुहरु स्वर्गीय हरि प्रसाद प्रधानको स्मरण गर्ने औपचारिकता निर्वाह गर्दछौं।

वर्तमान सहज भए पनि इतिहास कठोर हुन्छ । सधै भाट इतिहासले रजाइँ गर्न सक्दैन । यदि का.मु. तथा निमित्त बुद्धिजीवीहरुद्वारा रचित भाट इतिहास चिरस्थायी हुन्थ्यो भने गान्तोकतिर जन्मी कालिम्पोङतिर हुर्के बढेको एउटा प्रवासीले नेपालको न्यायिक इतिहासमा "हरि प्रसाद प्रधान" भन्ने कोसे ढुंगाको सम्मानित दर्जा पाउँदैनथ्यो । कसले के दियो, कसले के लियो यसको लेखाजोखा भएरै छाड्दो रहेछ – यसको सर्वोत्कृष्ट दृष्टान्त स्वर्गीय हरि प्रसाद प्रधान बाहेक अरु को हुन सक्दछ र ?

न्यायरुपी सगरमाथाको एक्लो आरोही हुनुहुन्थ्यो स्वर्गीय हरि प्रसाद प्रधान । निसन्देह हाम्रो न्यायपालिकाको इतिहासमा प्रधान न्यायाधीश हरि प्रसाद प्रधानले त्यो उच्चतम स्थान बनाउनुभएको छ, जहाँ पुग्ने प्रयत्न सबैबाट हुन जरुरी छ । आज उहाँपछि ८ जना प्रधान न्यायाधीशहरु हामीले पाइसकेका छौं । हरि प्रसाद प्रधानले जति न्यायपालिकालाई देन दिने अर्को प्रधान न्यायाधीश हामीले पायौं पाएनौं गम्भिर छलफलको विषय हुन् सक्दछ । तर एउटा निश्चित कुरा हो भने केही देन दिएर जाने प्रधान न्यायाधीशहरुको संख्या निकाल्न एउटा हातका औंला पनि धेरै बढी हुने निश्चितै छ ।

उहाँलाई मैले उहाँका निर्णयहरुमा पढेको छु । उहाँका विषयमा मैले चर्चा परिचर्चामा सुनेको छु । निर्भीकता उहाँको चरित्र थियो, न्यायप्रियता उहाँको स्वभाव थियो र न्यायपालिकाको संस्थागत विकास गरौं भन्ने उत्साह उहाँको लक्ष्य थियो – सबैको यही प्रतिक्रिया रहेको पाएको छु । जब-जब न्यायपालिकाको स्वतन्त्रताको प्रश्न उठ्ने गर्दछ त्यहाँ हरि प्रसाद प्रधानको नाम अनिवार्यत: गाँसिने गर्दछ तथा जब-जब न्यायपालिकामा दवाब र हस्तक्षेप जस्ता कुराको चर्चा चल्दछ त्यहाँ अनिवार्यत: हरि प्रसाद प्रधानको स्मरण गर्ने गरिन्छ । नेपालमा कानून व्यवसायको भवनको जगमा पनि हरि प्रसाद प्रधान नै हुनुहुन्छ । न्यायपालिकाको भित्तामा पनि हरि प्रसाद प्रधान नै देखिनु हुन्छ ।

स्व. प्रधानको पुर्खौली थलो भक्तपुर हो । जन्म र शिक्षा आदि दार्जीलिङ, कालिङपोङ, गान्तोक र कलकत्तामा भयो । एम.ए., एल.एल.बी. को उपाधि प्राप्त स्वर्गीय प्रधान उहाँका पारिवारिक सुत्रका अनुसार तत्कालीन सिक्किम राज्यका काउन्सिलर हुनुभयो । सोही देशको उच्च अदालतमाथिको पुनरावेदकीय ट्रिबुनलको

सदस्य रहेर पनि काम गर्नुभयो र कलकत्ता उच्च अदालतको न्यायाधीश पनि रहनुभयो । यी कुराको चर्चा मैले कानून-५ (पुरानो) मा गरेको छु ।

भारतमा उहाँको ब्यक्तित्व कानून व्यवसायी तथा न्यायाधीशको रुपमा स्थापित थियो । २००७ सालको परिवर्तनपछि प्रजातन्त्रको सबल खाँबो आधुनिक न्यायपालिकाको स्थापना र सम्वर्ध्दन गर्न प्रधान न्यायाधीशको रुपमा २००८ सालमा उहालाई नेपालमा निम्त्याइयो। २००८/४/७ देखि २०१३/२/७ सम्म प्रधान न्यायाधीशको रुपमा उहाँको पहिलो कार्यकाल रह्यो। आफ्नै परम्पराबाट विकसित राणाकालीन न्यायिक पद्धति र प्रणालीलाई पश्चिमी ढंगमा ढाल्ने जिम्मेवारी उहाँलाई दिइयो। सर्वोच्च अदालतलाई अभिलेख अदालतको रुपमा स्थापित गर्न उहाँले दिनुभएको देनलाई अविस्मरणीय मानिन्छ। अदालतको अवहेलना सम्बन्धमा नेपालमा चलेको पहिलो मुद्दा "अदालतले कानमा तेल हाल्यो ...."लेखिनु अवहेलनाजन्य थियो थिएन विवाद हुन् सक्दछ, तर यो मुद्दाबाट अदालतको गरिमा राख्न सजाय गर्न सकिने भन्ने कुराको सूत्रपात भएको कुरामा विवाद गर्न सकिँदैन। यसका अलावा रिटको सैद्धान्तिक जानकारी र प्रयोग, न्यायपालिकाको प्रतिष्ठा, जनताका मौलिक हक सुरक्षा गर्न अदालतको भूमिका, श्री ५ तथा सर्वोच्च अदालतको सम्बन्ध, श्री ५ को शाही विशेषाधिकार र कार्यपालिकाको तथा न्यायपालिका बीचको शक्ति सन्तुलन तथा हस्तक्षेपको दृढ प्रतिकार जस्ता कुरामा उहाँको योगदान बिर्सने हो भने नेपालको न्यायपालिकाको इतिहास अधुरो हुनेछ।

वकिल न्याय प्रशासनका आवश्यक अंग हुन् भन्ने सकारात्मक सोचाई, सिद्धान्त र व्यवहार दुवैमा उहाँ राख्नुहुन्थ्यो। त्यसबेला कानून व्यवसायमा संग्लन व्याक्तिहरुले उहाँबाट पाउनुभएको प्रोत्साहनलाई अझै स्मरण गर्ने वकीलहरु बारमा हुँदै हुनुहुन्छ।

२०२०/८/२९ मा राजीनामा गरेको केही दिनपछि नै उहाँको भौतिक शरीर ब्रह्ममा लीन भयो। तर जति-जति समयले गति लिँदो छ उहाँको सम्झनाले प्रखरता लिँदो छ, यौवनावस्थाले पूर्णता हासिल गर्दोछ।

आज स्व. हरि प्रसाद प्रधान हाम्रा स्मृतिमा मात्र रहनु भए पनि उहाँको योगदान सदा स्मरणको विषयवस्तु हुनु र बेला-बेलामा झकझक्याईरहनु उहाँको लागि कम

गौरवको कुरा होइन । स्वर्गीय हरि प्रसाद प्रधान एउटा खुला पुस्तक हुनुहुन्छ, जुन पुस्तकको पहिलो अध्यायमा “केही त गर, जो इतिहासमा लेखियोस्” भन्ने वाक्य अङ्कित हुनै पर्दछ, भने दोस्रो अध्यायमा “अमरत्वको प्राप्तिको अभिलाषा राख जसले तिम्रा सन्तान दर सन्तानलाई गैरवानुभूति देओस्” भन्ने वाक्य कुँदिएको हुनै पर्दछ । यसरी नै तेस्रो अध्यायमा “आयो, गयो, खायो, मर्यो, यस्तो जन्म लिनुभन्दा संसारमा नआएकै वेश” – यही वाक्य मुद्रित हुनै पर्दछ ।

हरि प्रसाद प्रधान व्यक्ति होइन संस्था बन्नु पर्दछ तथा हरि प्रसाद प्रधान इतिहास होइन उदेश्य हुनु पर्दछ, आजको आवश्यकता भनेको यही हो ।

# निष्पक्ष र निर्भीक न्यायकर्ता हरि प्रसाद प्रधान

**सोमनाथ घिमिरे "व्यास"**

भक्तपुरको सुकुलढोका नजीकै बस्ने प्रधान परिवार मध्येका एक हरि प्रसाद प्रधान हुनुहुन्थ्यो। नेपाल राष्ट्रको उन्नतिका निमित्त पाइलो चाल्ने अवस्थामा नै जहाँनियाँ शासनको दृष्टिमा पर्नु भएकोले नेपालमा भएको आफ्नो सर्वस्वलाई तिलाञ्जली दिँदै उहाँले दार्जीलिङको बास गर्नु पर्यो। दार्जीलिङ र कलकत्तामा कानूनको उच्च अध्ययन गरेपछि उहाँले केही दिन कलकत्ताको कोर्टमा नोकरी गर्नुभयो।

दार्जीलिङको कोर्टमा नेपाली भाषीको आवश्यकता परेपछि उहाँलाई दार्जीलिङ पठाइयो। सातसालको क्रान्तिमा दार्जीलिङ निवासी नेपालीहरुले पनि नेपालमा प्रजातन्त्र निम्ति पूरा सहयोग गरेका थिए। त्यसै प्रसंगमा प्रधानले नेपाल प्रवेश गर्नुभयो र स्व. श्री ५ त्रिभुवनबाट प्रधान न्यायालय गठन गरी त्यसको प्रमुख पदमा उहाँलाई नियुक्त गरी बक्स्यो। त्यसवेला प्रधान न्यायाधीशको निवास नबनेको हुँदा उहाँका सुपुत्र अरुण प्रधान डेराको खोजीमा सल्लाह लिन मकहाँ आउनुभयो। क्रान्तिको अभियोग लागेका सत्य समशेरको भारतमै बास भएकोले उनको काठमाडौंको सत्य भवनको हेरविचारको जिम्मा मलाई थियो। सत्य भवनको उत्तरपट्टिको लङमा लगी ताल्चा खोली मैले देखाए। उहाँहरुलाई रुचि भएकोले सत्य समशेरसंग अनुमति लिई त्यो भवनमा उहाँलाई राखिएको थियो। ढोकामा "प्रवेश निषेध" लेखिएकोले कुनै व्यात्तिले पनि निवासमा उहाँसँग भेट्न पाउँदैनथे। उहाँलाई आवश्यक पर्ने सामान र अन्य प्रबन्ध सबै मैले मिलाइदिनु पर्दथ्यो। नित्य शक्तिको सेवा, चण्डी कीलक आदिको पाठ उहाँ गर्नुहुन्थ्यो। पाठको वेला उहाँ कसैसँग बोल्नु हुन्नथ्यो। उहाँको साधारण कोठा सबैसँगको मिलनसारिता, मधुर भाषण, साधारण पवित्र खाना देखेर जनता

उहाँप्रति आकृष्ट हुन्थे । कार्यालयजाने वेला भगवतीको सिन्दुर निधारमा लगाएर कसैसँग नबोली मोटरमा बस्नुहुन्थ्यो । कार्यालय पुगेपछि पनि अनुचित गफ गर्ने, ठट्टा गर्ने आदि उहाँको बानी थिएन । मुद्दा सुन्दा आँखा चिम्लेर एकत्व भावले सुन्नुहुन्थ्यो । सुनिसकेपछि आँखा खोली तोक बोल्नु हुन्थ्यो । त्यो तोक तराजु तलमाथि नपरी ठीक ठाउँमा परे जस्तै हुन्थ्यो ।

एक दिनको कुरा हो । पूर्व २ नं. सैंबू बस्ने हवल्दार चन्द्र प्रसाद पौडेलका छोरा लाल प्रसादको ऐजन बस्ने अनुरुद्र प्रसादका साथ दोहोरो कुटपीट हुन गएछ । बलिया हृष्टपुष्ट पहलमान जस्ता अनिरुद्र ठाउँमा नै मरेछन् । कमजोर, दुब्ला लाल प्रसादलाई ज्यानमारा ठहराई चरिकोट अदालतले दमलको फैसला गरेछ । उनी सेन्ट्रल जेलमा थुनिएका थिए । मेरो ससुरा नाता पर्ने हुँदा चन्द्र प्रसाद मेरो घरमा बराबर आउनु हुन्थ्यो । पाल्ने छोरा जेल परिहाल्यो, क्रिया गर्ने मान्छे पनि छैन, मेरो बाँच्ने साधन नै छैन बिचल्ली परे भन्दै उहाँ रुनुहुन्थ्यो । प्रसंगवस एक दिन निर्धारित समयभन्दा केही ढिलो म न्यायाधीशज्यूकहाँ पुगें । मैले माथिको घटना सबै बताउँदै ढिलो भएको कारण उहाँलाई सुनाएँ । उहाँले भन्नुभयो – "त्यो सबै कुरा खोलेर एउटा निवेदन मकहाँ दिन लगाउनुहोस् अन्यायै परेको रहेछ भने जगदम्बाले कृपा गर्नु हुनेछ । परन्तु त्यो निवेदन दिने वेलामा मेरो अगाडिको बेञ्चमा तपाई पनि आएर बस्नु होला ।" हवल्दार चन्द्र प्रसादले बेञ्चको अगाडि गई हातमा निवेदन पत्र लिई मेरो छोरो अन्यायमा पर्यो भन्दै रुदै बताए । अगाडि बेञ्चमा म बसेर सुन्दै थिएं फाँटवालाले त्यो निवेदन हातबाट लिई श्रीमान समक्ष सबै सुनाए । प्रधान न्यायाधीशले न्यायाधीश महेन्द्र बहादुर महततिर फर्केर मलाई त अन्यायै परेजस्तो लाग्यो तपाईको के विचार छ ? भन्दा महतज्यूले पनि मलाई पनि त्यस्तै लाग्यो, भन्नुभयो । यत्तिकैमा हरिप्रसादज्यूले म दार्जीलिङमा छँदा एउटा यस्तै केश परेको थियो, यस्ता केशलाई कानूनले गफलत भन्ने संज्ञा दिएको छ, एक पटक झगडिया झिकाई सामुन्नेमा हेरौं, उसैको मुखबाट सुनौं, अनि विचार गरौंला, सेन्ट्रल जेलबाट त्यो कैदीलाई आजै यहाँ ल्याउनु भन्ने आदेश दिनुभयो । नेल हतकडी सहितका लाल प्रसादलाई सोही दिन अदालतमा ल्याइयो । सामुन्नेमा आएपछि "कया हो तिमीले त मान्छे मारेछौं नि !" भनि प्रधान न्यायाधीश आफैले सोध्नु भयो । कैदीले हजुर मैले छोएको पनि छैन, त्यो रिसाहा मान्छे, ब्लडप्रेसरको रोगी, आफ्नै कारणले मेरो अगाडि

मर्यो, म अभागी, अपराधै नगरे पनि झ्यालखानमा बस्नु पर्यो, भनेर सुनाए। प्रधान न्यायाधीशले तत्कालै यो गफलत भएको हो यसलाई ५००/- जरीवाना गरी आजै नेल काटिदिनु भन्ने आदेश गर्नुभयो। सो रुपैयाँ मैले तिरिदिएँ।त्यसै दिन लाल प्रसाद जेलबाट छुटे।

अर्को घटना – मृगेन्द्र शमशेर र भरत शमशेर दुवैलाई राष्ट्रमा आतंक मच्चाए भन्ने अभियोगमा सरकारले पक्राउ गर्यो। उजुर परेपछि प्रधान न्यायाधीश हरि प्रसादको इजलासले पक्राउ गर्न नहुने व्यक्ति पक्राउ गरेवापत पक्रन आदेश दिने व्यक्तिलाई रु. १०/- जरीवाना गरी यिनलाई छोडिदिनु भन्ने आदेश दिई छुटाइ दिनुभयो। त्यस बखत मातृका प्रसाद कोइराला प्रधानमन्त्री हुनुहुन्थ्यो।

तेज बहादुर कार्की (रामेछाप, सुनारपानीका) टंगाल गैह्रीधारामा बस्थे, हरि प्रसाद प्रधानसँग उनको परिचय छ भनेर एकजना उनलाई गुहार्न गयो। तेज बहादुरले २ टिन घीउ ल्याउ मुद्दा जिताइ दिन्छु भनेछन्। झगडियाले २ टिन घीउ ल्याई तेज बहादुरलाई दियो। तर मुद्दा हारिएछ। अनि झगडियाले तेज बहादुरलाई समात्यो। उनले भनेछन् – "न्यायाधीशले घीउ पनि खायो, मुद्दा पनि हराइदियो म के गरौं ? यो कुरा प्रधानज्यूको कानमा पुग्यो। उहाँले तेज बहादुरलाई पक्रन पठाउनु भयो। तर पहिले नै  कुरा थाहा पाएर उनी भागे। हरि प्रसादजी बहाल भएसम्म उनी काठमान्डौं आएनन्।

हरि प्रसादजी निष्पक्ष न्यायकर्ता, धार्मिक र उदार चरित्रका व्यक्ति हुनुहुन्थ्यो। कसैप्रति पनि अन्याय नहोस्, न्याय ठीक ठाउँमा परोस् भन्ने कुरामा उहाँ सदैव सचेत रहनु हुन्थ्यो। अहिलेका न्यायाधीशज्यूहरुले हरि प्रसाद प्रधानलाई आर्दश मानी उहाँकै जस्तो न्याय निसाफ गर्न तत्पर रहनु भए नेपालको न्याय प्रणाली उदारणीय बन्नेछ।

हरि प्रसाद प्रधानसँग गरिएको संगतका ती क्षणहरुलाई म आफ्नो जीवनका महत्वपूर्ण प्राप्ति मध्ये नै ठान्दछु। ओझेल परेका यस्ता प्रतिभाहरुलाई उजिल्याउने काम गर्ने शेषराजजीको युवा जाँगरको म प्रशंसा गर्दछु। - अलम्

("न्याय" भाग ४)

# नेपाली साहित्य सम्मेलनको उदघाटन समारोहमा हरि प्रसाद प्रधानको वक्तव्य

*(२५ मे, सन् १९२४ मा हिन्दु पब्लिक हल दार्जीलिङमा नेपाली साहित्य सम्मेलन स्थापना गर्न हरि प्रसाद प्रधानको सभापतित्वमा आयोजित सार्वजनिक सभामा हरि प्रसाद प्रधानको वक्तव्यको सरांश: सं.)*

श्रीमान् हरि प्रसाद प्रधान एम.ए. बी. एल. ले आजको सभामा सभापतिको आसन ग्रहण गर्नुपर्छ भनि श्री पण्डित धरणीधर शर्माले प्रस्ताव गर्नुभयो।

श्री अगम सिहं गिरीले यस प्रस्तावको अनुमोदन गर्नुभयो औ यसो गर्दा निम्नलिखित आशयको ब्याख्यान उहाँले गर्नुभयो।

"आज मलाई साँचै बढो आनन्द लाग्यो। यस्तो आनन्द अनुभव गर्ने सुयोग मेरा जीवनमा बहुतै कम लाभ भएको होला। म जाबो एउटा प्राय: अशिक्षित व्यक्तिलाई समेत यस्तो आनन्द लाग्यो भने यी विद्वानहरुका जसका परिश्रमको फलस्वरूप आज यो दार्जीलिङ जस्तो अविद्याले अँधेरो भएको ठाउँमा "नेपाली साहित्य सम्मेलन" को निउ स्थापित हुन लागि रहेछ आनन्द र उत्साहको सीमा कहाँ सम्मको भयो होला।

श्री पण्डित धरणीधर शर्माजीले श्रीमान् हरि प्रसाद प्रधान महाशयलाई आजको सभापति हुन भनि प्रस्ताव गर्नुभयो तर उहाँको केही परिचय दिनु भएन। यसको कारण शायद सूर्यलाई दिपक किन देखाउँनु भनेर नै होला तर अनुमोदन गर्दा केही परिचय नदिई म रहन सक्तिन।

प्रस्तावित सभापति महोदय हाम्रा यस खण्डका नेपालीहरु मध्येका प्रथम एम.ए. बी. एल. दार्जीलिङ म्युनिसिप्यालिटी र दार्जीलिङ डिस्ट्रीक्ट बोर्डहरुका प्रथम भाइस-चेयरमेन, हिलमेन्स एसोसियसनका सेक्रेटरी, सिक्किम इस्टेट काउन्सिलका

मेम्बर औ सिक्किम राज्यका एक जमिन्दार हुगुहुन्छ । यस्ता सर्वगुणले युक्त भएका, धीर स्वभाव भएका विद्वान नै आजको यस सभाका सभापति हुनलाई उपयुक्त हुनुहुन्छ । यसकारण श्री पण्डित धरणीधरजीको प्रस्ताब म सहर्ष हृदयले समर्थन गरी सभा[ति महोदयलाई आफ्नो आसन ग्रहण गर्नलाई आमन्त्रण गर्दछु।

सर्वसम्मतिले यो प्रस्ताव स्वीकृत हुँदा श्रीमान हरि प्रसाद प्रधानजीले सभापतिको आसन ग्रहण गरी तल लेखिएको व्याख्यान गर्नुभयो ।

## सभापतिको भाषणको साराँश

सज्जनगण ! यतिका म भन्दा बुढा पाका तथा अनुभवी सज्जनहरु यस सभामा छँदा छँदै पनि तपाईहरुले म जस्तो थोरै उमेरका तथा संसारको केही अनुभव पनि नभएको मानिसलाई आजको यस महान् सभाको सभापति छान्नु हुदाँ म आफ्नो ठूलो गौरव भएको सम्झन्छु तथा तपाईहरुलाई सहार्दिक धन्यवाद पनि चढाउँछु । हुनता मैले यो काम राम्ररी गर्न सकुँला भन्ने मेरो विश्वास छैन तर तपाईहरुका सहायताले मैले यो काम पूर्ण गर्न सकुँला भन्ने आशा गरेको छु ।

सज्जनगण ! नेपाली भाषाको उन्नती गर्नलाई नेपाली साहित्य सम्मलेन स्थापित गर्न भनि आजको सभा भएको हो । यो कुरा सबै तपाईहरुलाई जाहेर नै छ । श्री माननीय जस्टिस सर आशुतोष मुखर्जी के.टी. सरस्वती कलकत्ता विश्वविद्यालयका सुयोग्य भाइस-चान्सलरका कृपाले आज स्कूलमा पढ्ने साना-साना बालकदेखी बी.ए. सम्म पढ्ने मानिस लगायत सबैले नेपाली भाषा पढ्न पाइरहेछन्

म कलेजमा पढ्दा नेपाली भाषालाई विश्वविद्यालयले आफ्नो पाठ्यक्रममा स्वीकार गरेको थिएन र मैले सो सौभाग्यबाट बञ्चित हुनु परेको थियो । म बी.ए. मा पुग्दा अब नेपाली भाषा स्वीकार हुन्छ हुन्छ भन्ने कुरा थियो औ नेपाली भाषा स्वीकार भएपछि म पनि नेपाली भाषा पढ्न पाउँला भन्ने विचार मेरा हृदयमा उत्पन्न हुँदा मेरो हर्षको सीमा भएन । तर म बी.ए. पास हुँदा पनि दुर्भाग्यवश तैपनि नेपाली भाषा स्वीकार भएन । श्री माननीय जस्टिस सर आशुतोषजी का असीम कृपाले सो कुरा भयो । अब त केवल कलकत्ता विश्वविद्यालयमा मात्र होइन किन्तु अरु-अरु विश्वविद्यालयका पाठ्यक्रममा पनि नेपाली भाषाले स्थान पाएको छ ।

## पाठ्यपुस्तकको अभाव

तर नेपाली भाषामा उपयुक्त पाठ्यपुस्तकहरुको अभावले गर्दा भाषा पढ्न बालकहरुलाई अझ धेरै नै कष्ट पर्छ । जहिलेसम्म असल २ पाठ्यपुस्तकहरु नेपाली भाषामा लेखिँदैन, जहिलेसम्म बालकहरुले भिन्न २ ज्ञान लाभ गर्न अरु-अरु भाषाहरु पढ्नै पर्छ औ यसो हुँदा ज्ञान प्रचारको कार्यमा कत्तिको कठिनता पर्छ सो हामी सबैलाई थाहा छ । यो कुरा विशेष गरी नेपाली भाषा, विश्वविद्यालयको पाठ्यक्रममा स्वीकृत नहुँदा यसको सट्टामा अरु-अरु भाषा पढ्नेहरुलाई राम्ररी थाहा छ । यसकारण यस सम्मलेनको एउटा उदेश्य उपयुक्त पाठ्यपुस्तकहरु प्रकाशित गर्नेछ। पछी-पछी विश्वविद्यालयसँग लेखापढी गरी नेपाली भाषासम्बन्धी यावत् काम यस सम्मेलनद्वारा होस् भन्ने पनि गराउँनु पर्नेछ ।

## सम्मेलनको नाम

यस सम्मेलनको नाउँ "नेपाली साहित्य सम्मेलन" राख्नु पर्ला भन्ने हाम्रो विचार छ किनभने "नेपाली" शब्दको विस्तृत अर्थ हुन्छ । यस शब्दले नेपाल देशका सबै जाति, जस्तै मगर,गुरुङ,किराती, नेवार, लिम्बु इत्यादि सबैको बोध हुन्छ औ यसद्वारा माथि भनिएका तथा अरु-अरु यावत् जातिहरु एउटै महान नेपाली राष्ट्रका अंग रहेछन् भन्ने पनि जाहेर हुन्छ ।

कसै-कसैका मनमा यो सम्मेलनले त गोर्खालीहरुको भाषाको पो उन्नति गर्न आँटेको रहेछ भन्ने शंका उत्पन्न होला तर त्यस्तो त शंका गर्नु उचित छैन किनभने नेपाली भाषा आजकाल हिमाचल प्रदेशको Lingua Franca (सबैले बुझ्ने भाषा) जस्तै भइरहेछ । यस प्रदेशमा बस्ने मानिसले पृथक, पृथक बोली बोले पनि नेपाली भाषालाई नबुझ्ने कोही छैनन् । यसकारणले यो भाषा उन्नत भयो भने सबै जातिका मानिसलाई ज्ञान लाभ गर्न सजिलो हुनेछ । उस माथि पनि अब त नेपाली भाषा सबैको भइसकेको छ औ कुनै एउटा जातिले यस भाषालाई यो मेरै भाषा मात्र हो भन्न सुहाउँदैन ।

## विविध भाषा साहित्यको अन्वेषण

सम्मेलनको एउटा अर्को उदेश्य नेपालका प्राचीन भाषाहरु तथा साहित्यको खोजी गर्ने पनि छ । तपाईहरुसबैलाई नेवारी भाषाको ठूलो प्राचीन साहित्य छ भन्ने कुरा त थाहा नै छ । यस भाषालाई अचेल नेवारहरुले त विर्सीसकेके भने अरुको त के कुरा ? जर्मन भाषामा नेवारी भाषाको ब्याकरण बनाइएको छ औ रुसी भाषामा यसको कोष तथा ब्याकरण छ तर शोक ! हामी यसका विषयमा केही जान्दैनौं । यसैगरी लेप्चा भाषा पनि अचेल लुप्त हुन् लागि रहेछ ।

यी भाषाहरु अध्ययन गरी यिनका प्राचीन ग्रन्थहरु प्रकाशित गरी यिनलाई लुप्त हुन नदिनु भनि सम्मेलनले ठूलो उद्योग गर्नेछ । यस कार्यले विलीन हुन लागेका भाषाहरुको उद्धारका सँगसँगै नेपालको प्राचीन इतिहास, सभ्यता र नेवार जातिको गौरवपूर्ण सभ्यताका विषयमा पनि हामीलाई ज्ञान हुनेछ । अघि हाम्रा पुर्खाहरु कस्ता थिए, उनीहरुको के थीति रीति थियो इत्यादि कुरा जान्ने यो उक्त साधन छ ।
सज्जनगण ! आफ्नो भाषालाई उन्नत नगराई संसारमा हामी केही पनि गर्न सक्तैनौं । हामीलाई संसारले अशिक्षित जाति भन्छ औ हाम्रो दार्जीलिङ जिल्ला पनि Backward Tract (असभ्य मुलुक) भनिन्छ । हामीले शिक्षा प्राप्त गरे मात्र हाम्रो यो अपकिर्ति जानेछ । ज्ञानलाई सजिलो गराउँनका निमित्त आफ्नो भाषामा असल-असल पुस्तक प्रकाशित गर्नुपर्छ । यसकारण यो सम्मेलन स्थापित गर्नु परेको हो । तपाईलाई यो विचार पूर्णतया रुचिकर हुनेछ तथा तपाइले बुद्धिले सके बुद्धिले, धनले सके धनले औ बलले सके बलले यस सम्मेलनलाई सहायता गर्नुहोला भन्ने पूर्ण विश्वास छ ।

*(नेपाली साहित्य सम्मेलनको कार्य विवरण – सं. राय साहेब हरि प्रसाद प्रधान एम.ए. बी.एल. सभापतिद्वारा सन् १९२४ अगष्ट २५ मा प्रकाशित पुस्तिकाबाट – यो पुस्तिकाको सक्कल प्रति ज्ञानगुन रिसर्च इन्स्टिच्यूटको संग्रहमा सुरक्षित छ ।)*

**प्रस्तुतकर्ता – शेषराज सिवाकोटी**

# प्रधान न्यायाधीश स्वर्गीय हरि प्रसाद प्रधान: व्यक्तित्व स्मरण

**लीला बहादुर बस्नेत**

नेपाली भाषा, साहित्य, संगीत र इतिहासको क्षेत्रमा जसरी प्रवासमा बसेर विद्वान् विदुषीहरुले योगदान दिएका छन् त्यसभन्दा पनि माथि उठेर न्यायक्षेत्रमा योगदान भएको छ । राणा शासनकालमा बडाहाकिम जस्तो उच्च ओहोदामा आसिन गराउने प्रलोभनमा आफ्नो व्यक्तित्वलाई ननिहुँराईकन प्रजातान्त्रिक नेपालको प्रधान न्यायालयमा प्रधान न्यायाधीश पद ग्रहण गर्न सक्षम व्यक्तित्व हुनुहुन्थ्यो – स्वर्गीय हरि प्रसाद प्रधान । प्रजातन्त्रोत्तरकालको प्रधान न्यायालय विविध कानूनी एवं न्यायिक समस्या र जंजालबाट अगाडि बढ्दै थियो। राणाकालिन प्रधान न्यायालयलाई कायाकल्प गरी प्रजातान्त्रिक नेपालमा प्रधान न्यायालय ऐन, २००८ जारी भएको थियो । प्रारम्भमा नेपाल अन्तरिम शासन विधान, २००७ को धारा ३०(३) को बन्देजी व्यवस्थाले नेपालको नागरिक नभई र (क) कमसे कम १० वर्षसम्म नेपालमा कुनै इन्साफ गर्ने पदमा बहाल नभई प्रधान न्यायालयको प्रधान न्यायाधीश रा न्यायाधीश हुन् योग्यता नै पुग्दैनथ्यो । अन्तरिम शासन विधान, २००७ मा २००८ साल आषाढ ८ गते धारा ३०(३) मा प्रतिवन्धात्मक व्याक्यांश थपी – “तर प्रधान न्यायालयका प्रधान न्यायाधीश वा न्यायाधीशहरुको पद्मा नियुक्त गर्न लायक नेपालका नागरिक नपाइएको अवस्थामा गैर नागरिक पनि नियुक्त हुनेछन्” भनियो । प्रधान न्यायालय ऐन, २००८ नामाकरण गरिए पनि यसमा २००९/१/२६ मा मात्र श्री ५ त्रिभुवनबाट लालमोहर सदर गरिबक्सेको थियो । तत्पश्चात् मात्र स्वर्गीय श्री हरि प्रसाद प्रधानको नेपाल प्रधान न्यायालयजो पहिलो प्रधान न्यायाधीश पदमा श्री ५ त्रिभुवनबाट लालमोहरद्वारा नियुक्ति भएको थियो ।

प्रधान न्यायालयको प्रधान न्यायाधीश वा न्यायाधीशको पदमा नियुक्त भएको प्रत्येक व्यक्तिले आफ्नो पद ग्रहण गर्नुभन्दा अघि श्री ५ महाराजाधिराजका समक्ष वा मौसुफद्वारा यस कामका लागि निर्दिष्ट व्यक्तिका समक्ष शपथ लिई प्रतिज्ञापत्रमा सहीछाप गरी दाखिल गर्नुपर्ने व्यवस्था ऐनको दफा ९ मा गरिएको थियो। जसमा शपथको व्यहोरा यस प्रकार छ – "म जो नेपालको प्रधान न्यायालयको प्रधान न्यायाधीश वा न्यायाधीश नियुक्त भएको छु, परमात्मालाई साक्षी राखी शपथ ग्रहण गर्दछु वा सत्य निष्ठा सहित प्रतिज्ञा गर्दछु कि कानूनद्वारा स्थापित नेपालको अन्तरिम विधानप्रति श्रद्धाभक्ति राख्ने छु। म पुरा तवरले औं श्रद्धापूर्वक आफ्नो सम्पूर्ण योग्यता, ज्ञान र विवेकद्वारा आफ्नो पदको कर्तव्यलाई भए, पक्षपात, माया वा द्वेषभाव नराखी पालन गर्नेछु र साथै म नेपालको विधान र ऐन कानूनको मर्यादा कायम राख्ने छु ।"

उपरोक्त उल्लेखित शपथका साथ प्रधान न्यायालयको पदभार ग्रहण गर्नुभएका प्रवासी नेपाली स्वर्गीय श्री हरि प्रसाद प्रधान नेपालको न्यायरुपी सगरमाथाको एक्लो आरोही हुनुहुन्थ्यो। नेपाल प्रधान न्यायालय र सर्वोच्च अदालत नेपालमा समेत दुई पटकको कार्यकाल स्वर्गीय श्री प्रधानले व्यतित गर्नुभएको थियो। उहाँको पछिल्लो कार्यकाल भन्दा पहिलो कार्यकाल नेपालको न्यायिक इतिहासमा ज्यादै गरिमामय र महत्वपूर्ण काल मानिन्छ। हुनत पछिल्लो कार्यकालमा पनि उहाँले महत्वपूर्ण मुद्दाहरुमा ज्यादै विवेकशील न्याय प्रदान गर्नुभएको कुरा नकार्न सकिँदैन (निवेदक खिम कुमारी शाह वि. स्वर्गद्वारी आश्रमका ओमभक्त कार्की २०१९) तथापि पहिलो कार्यकालमा निक्कै ओजस्वी निर्णयहरु भएका थिए। सर्वोच्च अदालतले महत्वपूर्ण फैसलाहरुलाई नजिरको रुपमा २०१५ साल फागुन ७ गतेदेखि प्रकाशित गर्ने जमर्को गर्यो। फलत: नेपाल कानून पत्रिकाको जन्म भयो। नेपाल कानून पत्रिकाको वर्ष १ अंक १ मा निर्णय नं. १ को रुपमा स्वर्गीय श्री प्रधान सहितको डिभिजन बेन्चबाट २०१२/८/२२/४ मा फैसला भएको अंश मुद्दा प्रकासित हुन् पुग्यो। तत्पश्चात नेपाल कानून पत्रिकामा अघिपछी मिति परेर नै भए पनि महत्वपूर्ण फैसलाहरु प्रकाशित हुन पुगे। नेपाल कानून पत्रिकामा प्रकाशित स्वर्गीय प्रधानका किर्तिमय फैसलाहरुको सूची सम्म भएपनि उल्लेख गर्ने जमर्को गरिएको छ।

नेपालको कानून पत्रिकाका पुराना प्रतिहरु आजभोलि अप्राप्य भइसकेका

छन् । प्रधान न्यायालयकालका फैसलाहरु प्रकाशित गर्न सके बेशै हुने थियो । यद्यपि त्यस्ता फैसलाहरु पूर्णरुपमा प्रकाशित गर्न नसके पनि विषय सूची सम्म भएपनि प्रकाशित गर्न धृष्टता गरिएको छ । स्वर्गीय प्रधानको प्रथम कार्यकाल २००९ देखि २०१३ जेष्ठ सम्ममा भएका फैसलाहरुको सिंगल बेन्च, डिभिजन बेन्च, स्पेशल बेन्च र फुलबेन्च गरी चार तहमा विभाजन गरी विषय सूची मात्र यहाँ प्रकाशित गरिएको छ ।

**१. प्रधान न्यायालय सिंगल बेन्च**

१. शेर बहादुर लिम्बु उजुरवाला विरुद्ध गडूल ध्वज लिम्बु समेत विपक्षी, मुद्दा – वन, निर्णय नं. ११५, ने.का.प. २०१८, पृष्ठ १३९, फैसला मिति २०१०/९/२५/६ ।

२. मौलेश्वर मल कुर्मी विरुद्ध रामवली अहिर समेत, मुद्दा – भैसी चोरी, निर्णय नं. १५१, ने.का.प. २०१८, पृष्ठ ११६, फैसला मिति २०१०/११/२५ ।

३. नेपे दमाई उजुरवाला विरुद्ध कृष्ण बहादुर खड्का क्षत्री विपक्षी, मुद्दा – जबरजस्ती घटी बढी करणी, निर्णय नं. २, ने.का.प. २०१५, अंक १, पृष्ठ ५, फैसला मिति २०१२/१०/२९/५ ।

**२. प्रधान न्यायालय डिभिजन बेन्च**

१. वोध शमशेर समेत अपिलाट विरुद्ध ज. समर शमशेर रेस्पोण्डेण्ट, मुद्दा – अंश, नि.नं. १, ने.का.प. २०१५, अंक १, पृष्ठ १, फैसला मिति २०१२/८/२२/४ ।

२. उदय बहादुर गौली अपिलाट विरुद्ध टेक बहादुर गौली विपक्षी, मुद्दा – थैली बुझाई पाउँ, नि.नं. १३, ने.का.प. २०१६, पृष्ठ ६८, फैसला मिति २०१२/१/१३ ।

३. सुभद्रा कुमारी बस्नेत क्षत्रीनी समेत वादी विरुद्ध दण्डीकेशर थापा क्षत्री, मुद्दा – गुठी, नि.नं. ३८, ने.का.प. २०१६, पृष्ठ २०२, फैसला मिति २०११/४/११/२ ।

४. शिवनारायण ग्वार अपिलाट विरुद्ध फेकनी ग्वारनी समेत विपक्षी, मुद्दा – वकसपत्र बदर, नि.नं. ७२, ने.का.प. २०१६, पृष्ठ ३३२ ।

५. मेघ बहादुर पाखा राई विरुद्ध दल बहादुर लिम्बु, मुद्दा – ज्यान, नि.नं. १५६, ने.का.प. २०१८, पृष्ठ १४१, फैसला मिति २०१०/४/२१/४ ।

**३. प्रधान न्यायालय स्पेशल बेन्च**

१. कृष्ण खत्री क्षत्री निवेदक विरुद्ध भक्तपुर मैजिस्ट्रेट विपक्षी, मुद्दा – थुनछेक, नि.नं. ४०, ने.क.पा. २०१६, पृष्ठ २०८, फैसला मिति २०१२/२/१३/६ ।

२. साधुसरण सिंह राजपुत उजुरवाला विरुद्ध जाष्टिका प्रसाद उपाध्याय समेत विपक्षी, मुद्दा – हरण भएको जिमिदारी फिर्ता, नि.नं. ७९, ने.क.पा. २०१६, पृष्ठ ३७४, फैसला मिति २०१०/१०/२० ।

**४. प्रधान न्यायालय फुल बेन्च**

१. हरिनारायण माडवारी विरुद्ध गोपाल प्रसाद रौनियार समेत, मुद्दा – बन्धकी निखनाई पाउँ, नि.नं. २०, ने.का.प. २०१६, पृष्ठ १०४, फैसला मिति २०१०/५/१४/१ ।

२. श्री विश्वेश्वर प्रसाद कोइराला निवेदक विरुद्ध नेपाल सरकार डे.से. ग्रह मन्त्रालय, मुद्दा – हद फुकाई पाउँ, नि.नं. २३, ने.का.प. २०१६, पृष्ठ ११५, फैसला मिति २०१०/७/२६/४

३. श्री विशेश्वर प्रसाद कोइराला निवेदक विरुद्ध नेपाल सरकार काठमाडौं मैजिस्ट्रेट विपक्षी, मुद्दा – हद फुकाई पाउँ, नि.नं. २४, ने.का.प. २०१६, पृष्ठ १२३, फैसला मिति २०१०/७/२६/४ ।

४. रानी जानकी देवी समेत वादी विरुद्ध बनेन्द्र विक्रम साहेवज्यू प्रतिवादी, मुद्दा – वक्सपत्र बदर, नि.नं. २५, ने.का.प. २०१६, पृष्ठ १३१, फैसला मिति २०११/१०/३/१ ।

५. ले.ज. मृगेन्द्र शमशेर ज.व.रा. निवेदक विरुद्ध आई. जि.पी., मुद्दा – वेरिनसँग थुने, नि.नं. ३०, ने.का.प. २०१६, पृष्ठ १६०, फैसला मिति २०११/३/३१ ।

६. ले.ज. मृगेन्द्र शमशेर ज.व.रा. निवेदक विरुद्ध काठमाडौं मैजिस्ट्रेट विपक्षी, मुद्दा – वेरितसँग थुने, नि.नं. ३७, ने.का.प. २०१६, पृष्ठ १९७, फैसला मिति २०११/३/३१ ।

७. जिरोवती भन्ने चन्द्रकलावती अपिलाट विरुद्ध गेहेन्द्र शमशेर थापा रेस्पोण्डेण्ट प्रतिवादी, मुद्दा – डाँक रोकी पाउँ, नि.नं. ४१, ने.का.प. २०१६, पृष्ठ २१३, फैसला

मिति २०११/९/२१/४ ।

८. श्रीमती उपाध्यायनी अपिलाट वादी विरुद्ध श्री प्रसाद खत्री क्षेत्री रेस्पोण्डेण्ट प्रतिवादी, मुद्दा – राजीनामा बदर, नि.नं. ४६, ने.का.प. २०१६, पृष्ठ २३१, फैसला मिति २०१०/२/२५/१ ।

९. वेदकृष्ण श्रेष्ठ निवेदक विरुद्ध श्री सेक्रेटरी उद्योग वाणिज्य खाद्य सिभिल सप्लाइज विभाग विपक्षी, मुद्दा – प्रतिषेधको पुर्जी पाउँ, नि.नं. ४७, ने.का.प. २०१६, पृष्ठ २३४, फैसला मिति २०१०/१/२६ ।

१०. चिन बहादुर गिरी सन्यासी वादी अपिलाट विरुद्ध सरस्वती देवी समेत प्रतिवादी रेस्पोण्डेण्ट, मुद्दा – लिखत बदर, नि.नं. ४९, ने.का.प. २०१६, पृष्ठ २५५, फैसला मिति २०१०/१०/२५ ।

११. अपिलाट कर्ण बहादुर मगर रिरुद्ध तुलसी प्रसाद उपाध्याय, मुद्दा – जग्गा बाली, नि.नं. ६१, ने.का.प. २०१६, पृष्ठ ३०५, फैसला मिति २०११/१०/२०/४ ।

१२. वादी इन्द्रगोपाल श्रेष्ठ विरुद्ध कैलास श्रेष्ठ समेत प्रतिवादी, मुद्दा – अंश, नि.नं. ६३, ने.का.प. २०१६, पृष्ठ ३१०, फैसला मिति २०१०/११/२७/४ ।

१३. ना.मु. हरिराम जोशी विरुद्ध रा.गु. भोगेन्द्र राज पण्डितज्यू, मुद्दा – लिखित पास, नि.नं.६५, ने.का.प. २०१६, पृष्ठ ३१६, फैसला मिति २०१२/५/२२/४ ।

१४. अपिलाट पिताम्बर प्रसाद मुडभरी विरुद्ध व. हा. ऋद्धि विक्रम समेत विपक्षी, मुद्दा – विना कसूर जागीर खोसी भ्रष्टाचार लगाए, नि.नं. ६६, ने.का.प. २०१६, पृष्ठ ३१८, फैसला मिति २०१२/६/२३/१ ।

१५. निवेदक लक्ष्मी नायक सुडी विरुद्ध महतो सुडिनी विपक्ष, मुद्दा – राजीनामा, नि.नं. ६७, ने.का.प. २०१६, पृष्ठ ३२१, फैसला मिति २०१२/४/५/४ ।

१६. चक्रमान शाक्य समेत निवेदक विरुद्ध नेपाल सरकार मार्फत सेक्रेटरी गृह मन्त्रालय समेत विपक्षी, मुद्दा – थुनछेक, नि.नं. १५२, ने.का.प. २०१८, पृष्ठ १२०, फैसला मिति २०१०/११/२२/६ ।

१७. विसुनी मरी मु. स. गर्ने निजका छोरा लक्ष्मीनारायण राउत थारु वादी विरुद्ध साहेवज्यू रेवेन्त्रद विक्रम शाहका रानी छोरा प्रतिवादी विपक्षी, मुद्दा – जग्गा बाली, नि.नं.१५४, ने.का.प. २०१८, पृष्ठ १३१, फैसला मिति २०११/८/२/१ ।

१८. नावालक धनलक्ष्मी श्रेष्ठनी विरुद्ध वम बहादुर श्रेष्ठ, मुद्दा – बक्स जग्गा, नि.नं. १५७, ने.का.प. २०१८, पृष्ठ १५०, फैसला मिति २०१०/१/९/३ ।

१९. हरिहर पाध्या विरुद्ध ठग कुमारी उपाध्यायनी, मुद्दा – अंश, नि.नं. १६०, ने.का.प. २०१८, पृष्ठ १६७, फैसला मिति २०१२/१/७ ।

२०. वैकुण्ठ प्रसाद उपाध्याय विरुद्ध सदर पुलिस गोश्वरा, मुद्दा – सहीरास्ता पत्रिका बन्द गरे भन्ने, नि.नं. १६१, ने.का.प. २०१८, पृष्ठ १७३, फैसला मिति २०१०/११/२२ ।

नेपालको न्यायिक इतिहासको सन्दर्भमा प्रधान न्यायालयको भूमिका महत्वपूर्ण मानिन्छ । पश्चिमी  जगतमा प्रसिद्धि पाएको रिटको प्रारम्भ पनि यसै बखत भएको थियो । प्रधान न्यायालय ऐनको दफा ३० ले दिएको असाधारण अधिकारले तत्कालीन नेपाल सरकारलाई निक्कै नियन्त्रणमा राखेको कारण २०१० साल माघ ७ गतेको शाही घोषणाद्वारा दफा ३० मा संशोधन समेत गरियो । यद्यपि रिट क्षेत्रको प्रवेशले प्रधान न्यायालय गरिमामय हुनपुगेको कुरा चिरस्मरणीय छ । स्वर्गीय हरि प्रसाद प्रधान अमर न्यायमूर्ति थिए । अस्तु ।

# कानूनी राज्यको स्थापनामा न्यायमूर्ति हरि प्रसाद प्रधानको योगदान

**-काशीराज दाहाल**

कुनै पनि संस्था वा निकायको इज्जत, गरिमा र प्रतिष्ठा त्यसमा नेतृत्व प्रदान गर्ने व्यक्तिको क्षमता, योग्यता, इमान्दारिता र साहसमा निर्भर गर्दछ । संविधान र ऐन/नियमले कुनै संस्था वा निकायलाई गरिमामय र शक्तिसम्पन्न बनाउँदैमा त्यस्तो संस्था वा निकाय गरिमामय र मर्यादित स्वत हुन सक्तैन । त्यसका लागि त्यस्तो संस्था वा निकायमा कार्यरत व्यक्तिहरुको इमान्दारिता, सक्षमता र कार्यप्रतिको निष्ठाले नै जीवन्तता प्रदान गर्दछ । राज्यका सबै नागरिकहरुले राज्यशक्ति परिचालन गर्ने अंगहरुको नेतृत्व सम्हाल्ने अवसर पाउन सक्तैनन् । केही केही व्यक्तिहरुले मात्र त्यसमा पनि केही समयका लागि अवसर पाउने वास्तविकता हो । कविवर लेखनाथ पौडेलले – "कसैको लोकमा छैन एकैनास समुन्नन्ति । अरुको के कुरा हेर सन्ध्यामा सूर्यको गति" भन्नु भए झैँ शक्तिमा बस्नेहरुको अवस्था समेत एकनास हुँदैन । आफ्नो नेतृत्वकालमा खेलेको भूमिकाले नै उसको सफलता वा विफलताप्रति इतिहासले गर्ने मूल्यांकन हो । राज्यशक्ति प्रयोग गर्ने अङ्गहरुको नेतृत्व प्राप्त भएको अवसरमा निष्ठापूर्वक गरिएका साहसिक र इमान्दारीपूर्वक कार्यहरु नै त्यस्ता अंगहरुको निम्ति इज्जत हुन्छन्, त्यस्ता व्यक्तिहरुको त्यस्ता कार्य नै इतिहास बन्दछन्, जसलाई संस्मरण गर्दै वर्तमान गर्व गर्दछ ।

जनउत्तरदायी र जिम्मेवार सरकार, सक्षम विधायिका, स्वतन्त्र र सक्षम न्यायपालिका, स्वतन्त्र र निष्पक्ष प्रेस एवं कानूनी शासनको अवधारणा प्रजातन्त्रका आधारभूत मान्यताहरु हुन् । प्रजातान्त्रिक शासन व्यवस्थामा जनताका जन, धम् र स्वतन्त्रताको संरक्षण गर्ने अन्तिम संरक्षकको रुपमा स्वतन्त्र, निष्पक्ष, निर्भीक र सक्षम

न्यायपालिकाको संरचनालाई आत्मसात गरिएको हुन्छ। स्वेच्छाचारी शासन व्यवस्थामा पनि राज्यको न्यायिक शक्ति प्रयोग गर्ने न्यायमूर्तिहरु सक्षम र साहसिक बन्न सके भने मात्र पनि केही नागरिक अधिकारको संरक्षण हुनसक्दछ भन्ने ऐतिहासिक तथ्यहरु स्थापित छन्। बेलायतमा न्यायमूर्ति कोकले सत्रौं शताब्दीको प्रारम्भमा कानूनी राज्यको स्थापना गराउन र वैयक्तिक स्वतन्त्रताको संरक्षण गर्ने कार्यमा निर्वाह गरेको भूमिकालाई स्मरण गर्दै आज पनि समस्त न्यायिक जगत गर्व गर्दछ। तयस बेलाको निरङ्कुश शासन व्यवस्थामा पनि न्यायमूर्ति कोकले संसद निर्मित कानून कमन लको मान्यता र तर्कको विपरीत बन्दछ भने त्यस्तो कानून शून्य हुन्छ भनी न्यायिक पुनरावलोकनको अवधारणालाई विजारोपण गर्न पुगे। यसैगरी न्यायमूर्ति कोकले न्यायाधीशको निर्णय कुनै राजनीतिक शक्ति वा कसैको प्रभावबाट निर्देशित नभई कानून र न्यायका मान्य सिद्धान्तका आधारमा हुनुपर्ने कुराको व्याख्याद्वारा न्यायिक मान्यता र न्यायिक अनुशासनलाई जीवन्तता दिन पुगे। राजाको आज्ञा पालन गरी न्याय सम्पादनको पवित्र कार्यमा कानून तोडी कार्य गर्दा न्यायाधीशले लिएको कानून र न्यायिक शपथको प्रतिकूल हुने कुरा जाहेर गर्दै न्यायिक मान्यता र कानूनी राज्यको अवधारणालाई मुखरित गराउन न्यायमूर्तिको रुपमा निर्वाह गरेको भूमिकाको निम्ति न्यायमूर्ति कोक आज पनि स्तुत्य छन्। न्यायमूर्ति कोकले आफ्नो कार्यकालमा खेलेको भूमिकालाई मार्गदर्शनको रुपमा ग्रहण गरी ब्रिटिस संवैधानिक प्रणालीमा ब्रिटिश नागरिकका अधिकार र स्वतन्त्रताहरु कानूनी शासन सिद्धान्त अन्तर्गत न्यायाधीशहरुबाटै संरक्षित हुने गरेको वास्तविकतालाई आत्मसात गर्दै न्यायाधीशहरुप्रति बेलायती नागरिकहरुको अगाध आस्था र विश्वासका कारणले नै "यदि न्यायको बोल्ने वाणी छ भने त्यसले अंग्रेज न्यायाधीश जस्तै बोल्नेछ" भन्ने धारणा राखी अदालत र न्यायाधीशहरुप्रतिको आस्थालाई सम्मान गरेका छन्।

अमेरिका न्यायमूर्ति जोन मार्शलले मारबरी विरुद्ध मेडिसन (१८०३) को मुद्दामा न्यायिक पुनरावलोकन सिद्धान्तको विकासद्वारा संविधानको सर्वोच्चता प्रतिकूल हुने ऐन कानून अमान्य हुने सिद्धान्तको प्रतिपादन गरी शक्ति, प्रभावकारिता र मर्यादाविहिन अदालतलाई प्रतिष्ठित, मर्यादित र सम्मानित बनाउन पुगे। राजनीतिक शक्तिको सामु निष्प्रभावी रहेको न्यायपालिकालाई न्यायमूर्ति मार्शलको साहसिक निर्णयले शक्ति

संचार गरे पश्चात् अदालतले निर्वाह गरेको भूमिकाको कारण जनताका स्वतन्त्रताको संरक्षकको रुपमा न्यायपालिका रहेको तथ्यलाई अमेरिकीहरू गर्वका साथ हेर्दछन् । अमेरिकी न्यायमूर्ति जोन मार्शल र बारेनले संविधानको सर्वोच्चता कायम राख्न, वैयक्तिक स्वतन्त्रताको संरक्षण गर्न, कानूनी राज्यको अवधारणालाई मूर्तरूप दिन र राजनीतिक खराबीहरुलाई निराकरण गर्नमा समेत उल्लेखनीय योगदान पुर्याएको कारण ति न्यायमूर्तिका कतिपय निर्णयहरु राष्ट्रपतिका कार्य प्रतिकूल भएकोले राष्ट्रपतिहरु ती न्यायाधीशहरुको नियुक्तिलाई लिएर पछुताव गर्दछन् भने समग्र अमेरिकी जनताहरु भने ती न्यायाधीशहरुप्रति अगाध श्रद्धा र स्नेह जाहेर गर्दछन् ।

नेपालमा वि.सं. २००७ सालको आन्दोलनको परिणाम स्थापना भएको प्रजातान्त्रिक व्यवस्थाको शैशवकालमा प्रधान न्यायालयका प्रधान न्यायाधीश हरि प्रसाद प्रधानले कानूनी राज्यको स्थापना गराउन, संविधानको सर्वोच्चता कायम राख्न, वैयक्तिक स्वतन्त्रताको संरक्षण गर्ने सम्बन्धमा निर्वाह गरेको भूमिका न्यायिक जगतको निम्ति अविस्मरणीय छ । "सरकार चिल हो, जो स्वच्छन्द तवरले आकाशमा रिङ्दछ, नागरिक कुखुराका चल्ला हुन् जसलाई गाँज्न चिल सदैव प्रयत्नशील रहन्छ, अदालत ति कुखुराका बच्चाको माउ हो जसमा चिलले चल्लालाई झम्टिन खोजे आफ्नो पखेटा फिजाएर चल्लाको रक्षा गर्दछ" भन्ने न्यायिक चिन्तक न्यायमूर्ति प्रधानले तत्कालीन विषम् परिस्थितिमा आफ्नो न्यायिक पथबाट कति पनि विचलित नभई कार्यकारिणीलाई कानूनको पालना गराउन खेल्नु भएको निर्भीक र साहसिक भूमिकाले उहाँ नेपालको न्यायिक इतिहासमा सम्मानित न्यायमूर्तिको प्रतीकको रुपमा स्थापित हुनुहुन्छ ।

नेपालको अन्तरिम शासन विधान, २००७ को तेस्रो संशोधन, २०१० ले राज्यको विधायिकी र कार्यकारिणी शक्ति राजामा रहने गरी गरिएको संशोधन र प्रधान न्यायालयको अधिकारमा गरिएको कटौतीको विषयलाई लिएर कानूनविद् तथा न्यायविद् हरि प्रसाद प्रधानले व्यक्त गर्नुभएका देहायका विचारहरु प्रजातन्त्रका मर्मका रुपमा रहेका छन् ।

"फाल्गुण ७, २००७ को श्री ५ त्रिभुवनको शाही घोषणा नेपालको महाधिकारपत्र (Magnacarta) हो, जसले नेपालमा प्रजातन्त्र स्थापनाको प्रत्याभूति गरेको छ, ......

नेपाल अन्तरिम शासन विधान, २००७ को तेस्रो संशोधन (२०१०) ले प्रजातन्त्रको आधारभूत मान्यता र फाल्गुण ७ , २००७ सालको शाही घोषणालाई निस्तेज बनाउने तर्फ उन्मूख भएको छ, ...... राज्यको विधायिकी र कार्यकारिणी शक्ति श्री ५ मा मात्र रहने गरी गरिएको संशोधनले फाल्गुण ७ को शाही घोषणा र नेपाल अन्तरिम शासन विधान, २००७ को लक्षित उदेश्यसँग बाँझिएको छ, यस्तो कार्यले मध्ययुगीन बेलायतको स्थितिलाई निम्त्याएको छ । ...... विधानको धारा ३० मा गरेको परिवर्तनले न्यायपालिकाको स्वतन्त्रतालाई पूर्णरुपमा निस्तेज गरेको छ, प्रजातान्त्रिक शासन व्यवस्थामा कार्यकारिणीको गैरकानूनी र स्वच्छाचारी कार्यको विरुद्ध प्रभावकारी उपचार प्राप्त गर्ने सशक्त निकाय भनेको न्यायपालिका नै हो, प्रजातन्त्र भनेको शक्तिसन्तुलन र नियन्त्रण हो, यस संशोधनले कार्यकारिणीको स्वेच्छालाई नियन्त्रण गर्न शक्ति अदालतलाई नदिई खोसेको हुँदा देशको शासन व्यवस्था निरङ्कुशतातर्फ ढल्किन पुगेको छ, जो फाल्गुण ७ गतेको शाही घोषणा र नेपाल अन्तरिम शासन विधान, २००७ को उदेश्य र भावना विरुद्ध छ ।"

प्रधान न्यायालय (२००९-२०१३) का प्रधान न्यायाधीश हरि प्रसाद प्रधानले कानूनी राज्यको मूल्य, मान्यतालाई व्यवहारमा मुखरित गराउन, वैयक्तिक स्वतन्त्रताको संरक्षण गर्न, न्यायिक पुनरावलोकनको प्रयोगद्वारा कानूनको वैधताको परीक्षण गरी संविधान प्रतिकूल रहेका ऐन कानूनलाई अमान्य गर्न महत्वपूर्ण भूमिका निर्वाह गरेका तथ्यहरु वेदकृष्ण श्रेष्ठको मुद्दा (२०१०), फुलवर खवासको मुद्दा (२०१०), विश्वेश्वर प्रसाद कोइरालाको मुद्दा (२०१०), चक्रमान शाक्यको मुद्दा (२०१०), मृगेद्र शमशेरको मुद्दा (२०११), शुंभ शमशेरको मुद्दा (२०११), गणेशमान श्रेष्ठको मुद्दा (२०११), भरत शमशेर समेतको मुद्दा (२०११), गुलाम हैदर खांको मुद्दा (२०१२), हर्क बहादुर क्षेत्रीको मुद्दा (२०१२) जस्ता विभिन्न मुद्दाहरुमा गरिएका निर्णयहरुले स्थापित गरेका छन् । वेदकृष्ण श्रेष्ठको मुद्दा (२०१०) मा ऐन कानून बमोजिम राज्यको काम भएको छ छैन भनि हेर्ने कार्य न्यायपालिकाको हो, राज्यको संविधानको संरक्षण (गार्जियन) पनि न्यायालय नै हुन्छ भन्ने व्याख्याद्वारा न्यायालयको भूमिका र महत्वलाई स्थापित गरिएको छ । कानूनको अख्तियारी र उचित प्रक्रियाको अभावमा कसैलाई थुनामा राखिन्छ भने त्यस्तो थुनामा राख्ने अधिकारी नै सजायको भागी हुन्छ भन्ने सिद्धान्तलाई

फुलवर खवासको मुद्दामा मुर्तरुप दिएको छ । विश्वेश्वर प्रसाद कोइरालाको मुद्दामा (२०१०) संविधान प्रतिकूल हुने गरी जारी भएका ऐन कानूनका व्यवस्थाहरु निष्कृय र अमान्य हुने सिद्धान्तको प्रयोगद्वारा उपत्याकांचल कमिस्नर मेजिष्ट्रेट सवालको १ दफाको उपदफा (स) नेपाल अन्तरिम शासन विधान, २००७ को वैधानिक सिद्धान्त प्रतिकूल हुनाले अवैधानिक ठहर्ने निर्णय गरिएको छ । यसैगरी प्रस्तुत मुद्दामा कानून कार्यान्वयन गर्ने अधिकार प्राप्त व्यक्तिले कानूनको प्रयोग सदाशयता र उचितरुपमा गर्नुपर्ने, यदि दुरासय र अनुचित देखिन्छ भने अमान्य हुने सिद्धान्तको प्रयोगद्वारा वि.पि. कोइरालालाई चार भाञ्ज्याङ बाहिर नजानु भन्ने काठमाडौं मेजिष्ट्रेटको सो कारबाही उचित र कानूनसम्मत नदेखिँदा त्यस्तो कार्य बदर हुन्छ भन्ने निर्णय गरेको देखिन्छ । चक्रमान शाक्यको मुद्दा (२०१०), कृष्ण खत्री क्षेत्री (२०११), तुलकनाथ (२०११), चक्रपाणी शर्मा (२०११), रणधिर सुब्बा, हर्क बहादुर क्षेत्री (२०११), गुलाम खां (२०१२) को मुद्दाहरुमा कानूनको प्रयोग गलत किसिमले गर्न नहुने, सार्वजनिक सुरक्षा ऐन जस्तो संवेदनशील ऐनको प्रयोग गरी वैयक्तिक स्वतन्त्रता अपहरण गर्दा उचित सतर्कता अपनाउनु पर्ने, कानूनको रीत नपुगेको अवस्थामा नजरबन्दको कार्यउपर न्यायिक जाँच हुनसक्ने जस्ता सिद्धान्तहरुको प्रतिपादनद्वारा वैयक्तिक स्वतन्त्रताको संरक्षण गर्न न्यायालय प्रभावकारी र सक्षम हुने तथ्यलाई स्थापित गरिएको छ ।

न्यायमूर्ति हरि प्रसाद प्रधानले कानूनी राज्यको स्थापनार्थ, प्रशासनिक अराजकतालाई अन्त्य गर्न, ऐन कानूनमा आवश्यक संशोधनका निम्ति ध्यानाकर्षण गराउन, कानून र अदालतको फैसलाको अवज्ञा गर्ने, कार्यकारिणी शक्ति प्रयोग गर्ने, उच्च प्रशासकहरूलाई कानून र अदालतको आदेश/ फैसलाप्रति सम्मान गरी कार्यान्वयन गराउन उपयुक्त व्यवस्थाका निम्ति श्री ५ मा जाहेर गरेका कार्यहरुले पनि न्यायमूर्ति हरि प्रसाद प्रधान साहसिक र निर्भीकताका प्रतीकको रुपमा स्थापित छन् । मृगेन्द्र शमशेरको थुनुवा सम्बन्धी मुद्दा (२०११) मा राजकाज ऐनमा अविलम्ब संशोधन गर्नुपर्ने देखिएकोले सरकारको ध्यान त्यसतर्फ आकर्षित गराउने भन्ने व्यहोराको निर्णय भएको देखिन्छ भने मृगेन्द्र शमशेरकै फैसलाको अवहेलना सम्बन्धी मुद्दा (२०११) मा मेजिष्ट्रेटले प्रधान न्यायालयसँग यथोचित व्यवहार गर्नुपर्नेमा फूलबेञ्चको फैसलाको अनुचित र बेकानूनी टिका-टिप्पणी गरेको हुनाले मेजिष्ट्रेटले अदालतमा

पठाएको जवाफमा लेखिएका कतिपय शब्दहरु उपयुक्त नदेखिएकोले रेकर्डबाट हटाइदिने व्यहोरा उल्लेख गरी मेजिष्ट्रेटलाई सख्त नसिहत दिने भन्ने समेतको निर्णय गरिएको छ। सार्वजनिक सुरक्षा ऐनको उदेश्य विपरीत असम्बन्धित कुराहरुमा सुरक्षा कानून जस्ता गम्भीर कानून प्रयोग गरी थुनामा राखेको काये गल्ती हुने, सार्वजनिक सुरक्षा ऐनभित्रको काम कारवाही रीत बेरीत के छ भन्ने सम्बन्धमा न्यायिक जाँच हुनसक्ने, बेरीतको कारवाहीबाट वैयक्तिक स्वतन्त्रता अपहरण गर्न नसकिने भन्ने जस्ता सिद्धान्तहरुलाई शुंभ शमशेरको मुद्दा (२०११), गणेशमान श्रेष्ठको मुद्दा (२०११), भरत शमशेर समेतको मुद्दा (२०११) मा मूर्तरुप दिएको छ।

न्यायमूर्ति हरि प्रसाद प्रधानबाट त्यस्तो विषम् परिस्थितिमा यथोचित ऐन कानूनको अभावमा पनि न्यायिक रीतिथिति बसाल्नेतर्फ जुन कार्यहरु भएका छन् त्यसबाट न्याय प्रशासनलाई सक्षम र सवल बनाउने तर्फ उनको अठोट र निष्ठा प्रतिविम्बित हुन्छ। हुकुम प्रमाङ्गीबाट नियुक्त भएका कतिपय न्यायाधीशहरुलाई न्यायिक कार्य गर्न असक्षम र अयोग्य हुन्छ भनी अदालतमा बहाल गर्न इन्कार गरेका दृष्टान्तहरु देखा पर्दछन्। न्यायमूर्ति हरि प्रसाद प्रधानले न्यायपालिकाको अस्मिता जोगाउन खेल्नुभएको भूमिकालाई त्यसपछिका न्यायमूर्तिहरुले पनि सोही किसिमले निरन्तरता दिनसकेको भए नेपालको न्यायपालिका संमृद्ध हुने थियो। न्यायमुर्ति हरि प्रसाद प्रधानको दोस्रो कार्यकाल (२०१८-२०२०) प्रधान न्यायालयमा रहेर निर्वाह गरेको भूमिका संरहको अवस्था देखा पर्न सकेन। यस कार्यकालमा झाझु मिंयाको मुद्दा (२०२०) र हिरालाल भण्डारी (२०२०) को मुद्दामा गरिएको निर्णयहरु उल्लेखनीय रहेको भए पनि न्याय सम्पादनको कार्यमा कुनै अविस्मरणीय छाप छोड्न सकेको तथ्यहरु देखा पर्दैन। झाझु मिंयाको मुद्दामा – "वैयक्तिक स्वतन्त्रताको अपहरण हुनजाने मुद्दाहरुको निरुपण गर्दा न्यायाधीशहरुले ज्यादै सतर्कता अपनाउनु पर्ने हुन्छ, प्रस्तुत मुद्दामा न्यायाधीशले न्यायिक कर्तव्य पालन गरेको छ भन्न नसकिने हुँदा भविष्यमा पनि यस्तै लापरवाही काम न्यायाधीशबाट भएछ भने न्यायाधीश अयोग्य ठहरिनेछ" भन्ने व्यहोरा उल्लेख गरी बन्दीप्रत्यक्षीकरणको रिट जारी गरेको देखिन्छ। यसैगरी हिरालाल भण्डारीको मुद्दामा – "राजकाजको अभियोगमा थुनेर कारवाही गर्ने कानूनी व्यवस्था भए पनि कानूनको रीत पुर्याई थुन्नु पर्नेमा कानून बमोजिम थुनुवा पुर्जी

दिई थुनेको नदेखिएबाट थुनुवा गैरकानूनी ठहर्नाले बन्दीप्रत्यक्षीकरणको आदेश जारी हुने ठहर्छ, थुनुवालाई तुरुन्त छाडी थुनुवाबाट छाडेको रिपोर्ट अदालतलाई दिनु" भन्ने समेतको व्यहोराबाट आदेश भएको देखिन्छ ।

प्रधान न्यायालयपछिको नेपालको न्यायिक इतिहासको अवलोकन गर्दा न्यायमूर्तिका न्याय सम्पादनको कार्यहरुमा केही मुद्दाहरुमा गरिएको व्याख्या अनुदारता, संकुचन र कन्जुस्याइँपूर्ण देखा पर्दछ भने केही मुद्दाहरुमा उदारता र सक्षम भूमिका निर्वाह गर्न सफल रहेको जस्ता उतार चढावहरु देख्न सकिन्छ । आगामी दिनहरुमा प्रत्येक न्यायिक नेतृत्वले गरेको न्यायिक कार्यको समीक्षा र विशलेषणको खोजपूर्ण सामग्री प्रस्तुत गर्ने कुरा पाठकहरुमा जाहेर गर्दै प्रस्तुत लेखमा न्यायमूर्ति हरि प्रसाद प्रधानको योगदानलाई मात्र संक्षिप्त रुपमा समिक्षा गर्ने प्रयास गरेको छु । न्यायमूर्ति हरि प्रसाद प्रधानले प्रजातन्त्र स्थापनाको शैशवकालमा संविधानको सर्वोच्चतालाई हृदयङ्गम गरी न्यायिक सर्वोच्चता कायम राख्न जुन योगदान दिनुभएको थियो त्यस्ता कार्यले सर्वोच्च अदालतको स्थापना पश्चात् निरन्तरता पाउन सकेन । नेपाल अन्तरिम शासन विधान, २००७ को लक्ष्य र भावना विरुद्ध भएका ऐन कानूनहरु अमान्य हुने सिद्धान्तलाई न्यायमूर्ति प्रधानले विभिन्न मुद्दाहरुमा प्रयोग गरिसकेको हाम्रै मुलुकको उदाहरणहरु हुँदाहुँदै पनि नेपालको संविधान, २०१९ ले प्रदान गरेको मौलिक हकसँग बाझिएको भनी कतिपय ऐनहरुको वैधतामा नै चुनौति दिने गरी दायर भएको दी मदर ल्याण्डको मुद्दा र डा. के. आई. सिंहको मुद्दा (२०२२) मा – "ऐनको प्रस्तावनामा सार्वजनिक हितको निमित्त बनेको भन्ने लेखिएको छ भने सो ऐन सोही उदेश्यले बनेको भनी मान्न कर लाग्छ । वास्तवमा सो ऐनले सो उदेश्य पूर्ति गर्छ वा गर्दैन निहालेर हेर्ने अधिकार अदालतलाई छैन" भनि सर्वोच्च अदालतबाट गरिएको व्याख्याले सर्वोच्च अदालतको आफ्नै अधिकार आफनै व्याख्याले संकुचन बनाएको देखिन्छ । नेपाल अधिराज्यको संविधान, २०४७ ले स्वतन्त्र र सक्षम न्याय प्रणालीलाई संविधानको आधारभूत संरचनाको रुपमा स्वीकार गरी सर्वोच्च अदालतलाई न्यायिक पुनरावलोकनको शक्तिको प्रदानता, सार्वजनिक हक वा सरोकारका विवादमा हकदैयाको व्यापकता, पुर्णरुपमा न्याय गरी उचित उपचार प्रदान गर्न उपयुक्त आदेश जारी गर्न सक्ने संवैधानिक सुनिश्चितताको व्यवस्थाले नेपालको सर्वोच्च अदालत

अधिकार सम्पन्न र शक्तिशाली निकायको रुपमा संविधानद्वारा स्थापित छ । नेपाल अधिराज्यको संविधान, २०४७ अन्तर्गतको अदालत अब अधिकारविहीनको अवस्थामा छैन । संविधानले न्यायपालिकाबाट जुन अपेक्षा राखेको छ, त्यो पूरा गर्न न्यायमूर्तिहरु कतिको सक्षम भएका छन्, न्यायिक निर्णयहरुमा एकरुपता, सहस, इमान्दारिता, न्यायिक निष्ठा के कुन किसिमबाट व्यक्त भएका छन्, इतिहासले त्यस सम्बन्धी खोजपूर्ण अध्ययन गरी मूल्यांकन गर्ने नै छ । अन्तमा, न्यायमूर्ति स्वर्गीय हरि प्रसाद प्रधानप्रति शब्द श्रद्धा । अस्तु ।

# हरि प्रसाद प्रधान : एक सम्झना

**रामकृष्ण तिमल्सेना**

हरि प्रसाद प्रधानको नाम आज "न्यायको" पर्यायवाची शब्द झैँ नेपालको कानूनी जगतमा रहेको छ। मैले उहाँलाई देख्ने अवसर पाइन तर चिन्ने अवसर पाएँ । मेरो चिनाइ भौतिक सामिप्यता, अनुहार र उहाँको आदिभौतिक शरीरसँग सम्बन्ध राख्दैन, सयौं अरु कानून क्षेत्रका व्यक्तिहरु झैं म पनि सुनाई र उहाँका लेखाइबाट परिचित हुन पुगें । सुनेका कुरा विचार गरेर मात्र स्वीकार गर्नु पर्दछ, हरि प्रसाद प्रधानको बारेमा मैले सुनेका कुरालाई उहाँद्वारा लिखित फैसला र दिइएका आदेशको समकक्षमा राखेर हेर्दा निश्चय् पनि मेरो सुनाइमा सत्यता छ भन्ने लाग्दछ । त्यसैले यहाँ म हरि प्रसाद प्रधानको बारेमा कथा लेख्न लागेको छैन । आद्योपान्त जानकारी नभएको भए पनि जानेसम्मको र आफुलाई लागेसम्मको व्यक्तिगत कुरा लेख्न प्रयास गरेको छु । यो मेरो अनुसन्धानात्मक लेख होइन, केवल संक्षिप्त मनोवाद हो ।

आधुनिक नेपाली विधिशास्त्रको विधिवत थालनीको तिथि-मितिमा विवाद गर्न सकिए पनि हरि प्रसाद प्रधानसँग आजको न्यायिक स्वतन्त्रता, न्यायिक सक्रियता, न्यायिक नियन्त्रण र न्यायिक सर्वोच्चताका सिद्धान्तहरुको घनिष्ट सम्बन्ध रहेको कुरामा विवाद गर्न मिल्दैन । हरि प्रसाद प्रधानको मृत्यु भएको छ तर उँहा अमर हुनुहुन्छ । अमरताको लागि उहाँले न त अमृत पान नै गर्नु पर्यो न संजिवनी बुटीको इस्तेमाल । स्वस्थ एवं धार्मिक प्रवृतिका न्यायिक विचारको संसर्गले पैदा गरेको विचार र सो अनुकूलको आचरणबाट नै उहाँको अमरता सम्भव भएको हो । कानूनबाट मात्र न्याय सम्भव छ भन्ने भनाई धेरै हदसम्म सत्य भए पनि न्यायको प्रशासक, कानूनको व्याख्याता एवं न्यायाधीशको खुवी, कौशलता, साहस एवं निपुर्णताको अभावमा न्याय सम्भव नहुने कुरामा दुईमत छैन ।

स्वर्गीय हरि प्रसाद प्रधानको पालामा न त आजका जस्ता प्रशस्त आधुनिक

शैलीका कानून निर्माण भइसकेको थिए न कानूनी शिक्षा प्राप्त जनशक्ति । तैपनि न्यायपालिकाको नेपाली इतिहासमा हरि प्रसाद प्रधानको नाम स्वर्णिम अक्षरमा कुँदिएको छ ।

प्रथम पटक उहाँ मिति २००८/४/७ मा प्रधान न्यायाधीशको रुपमा नियुक्त हुनुभयो। उहाँको प्रधान न्यायाधीश नियुक्ति नै हेर्दा हामीले अनुभव गर्न सक्छौं कि नेपालमा संस्थागत रुपमा न्यायपालिकाको विकास भएको थिएन। उहाँ त्यस समय अघि न नेपालमा कानून व्यवसाय गर्नुहुन्थ्यो न त कुनै न्यायिक पदमा हुनुहुन्थ्यो। उहाँ न त Career Judge को रुपमा न त स्वदेशी कानूनको ज्ञाताको रुपमा नै प्रधान न्यायाधीश जस्तो पदमा पदाशिन हुन पाउनुभयो।

समय वलवान हुन्छ, समयले नै घटनाचक्रको निर्धारण गर्दछ। नेपालको भक्तपुरमा पुर्ख्यौली थलो भए पनि भारतको दादार्जीलिङ र कलकत्तामा अध्ययन गर्नु भएका प्रवासी नेपाली हरि प्रसाद प्रधान तत्कालीन नेपालको न्याय प्रशासनको विज्ञको रुपमा उक्त गरिमामय पद पाउनुभएको होइन। भारतीय कानूनको अध्ययन र भारतीय अदालतको अनुभव भएका व्यक्तिलाई प्रधान न्यायाधीश बनाइएबाट विधिवत रुपमा भारतीय अनुभवलाई हामीले आधिकारिक रुपमा नेपाल भित्र्यायौं। अरु सबै कुरामा (अपवाद हुन सक्छन्) भारतीय प्रभाव परेका "भारतखण्ड" का हामी जम्बुद्विपवासी नेपालीले हरि प्रसाद प्रधानको नेतृत्वमा नेपोलियन कोडको धेरै प्रभाव परेको, अन्वेषणात्मक पद्धतिको अनुकूल भएको न्याय प्रशासनलाई जिम्मा दियौं। जसको परिणाम अंग्रेजी कानून प्रणालीलाई आफ्नो संविधान र कानूनमा आत्मसात गरिसकेको भारतीय पद्धति अनुकूल हामीले पनि हाम्रो विधिशास्त्रको रुपरेखा कोर्न पुग्यौं।

भारतीय कमन ल नेपालमा भित्र्याउनु ठीक थियो थिएन ? तत्कालीन अन्वेषणात्मक पद्धति अनुकूलको नेपाली कानून प्रणाली नै राम्रो थियो वा थिएन, विचार-विमर्श र अध्ययनको विषयवस्तु हो, त्यसको लेखाजोखा प्रस्तुत सानो मनोवादमा गर्न सम्भव पनि छैन र यो कुरा सन्दर्भिक पनि छैन। तर नेपालमा हरि प्रसाद प्रधानसँगै आधुनिक कमन लमा आधारित नेपाली विधिशास्त्रको नेपालको भूमिमा आगमन भएको प्रमाण मिल्दछ।

न्यायाधीश कुशल, निर्भिक र योग्य भएपछि तुरुन्तै अनभिज्ञ कानून र न्याय प्रशासनसँग परिचित हुनसक्ने कुरा हरि प्रसादको उदाहरणले पुष्टि गर्दछ। भारतीय अनुभवमा हुर्किएको कारणले हुनसक्छ तत्कालसम्म नेपाली न्याय प्रशासनमा संग्लन व्यक्तिको " स्वामिभक्त" भन्दा माथि उठेर "कानूनभक्त" "न्यायवान" को रुपमा हरि प्रसादको शैली विकास हुन पुग्यो ।

प्रधान न्यायालय ऐन बमोजिम प्राप्त अधिकारलाई आधार मानेर आधुनिक संविधानवादका नूतन धारणाहरुको श्रीगणेश गर्ने श्रेय हरि प्रसाद प्रधानलाई जान्छ। न्यायिक पुनरावलोकनको व्यवस्था तत्कालीन अन्तरिम शासन विधानमा स्पष्ट रुपमा उल्लेख गरिएको थिएन तैपनि विधायिकी अधिकार (Statutory Right) प्रयोग गरेर प्रधान न्यायालयले यो अधिकारको सुत्रपात गरेको कुरालाई अद्वितीय मान्नु पर्दछ। न्यायिक सृजनाशीलता (Judicial Creativity) नै हरि प्रसाद प्रधानको विशेषता थियो। यो सृजनाशीलताको फलस्वरूप नै नेपालको प्रशासकीय कानूनमा न्यायिक नियन्त्रण (Judicial Control) को आधिकारिक प्रयोगको विधिवत थालनी हुनपुग्यो। प्रशासकीय कानूनको विकासलाई कानूनको शासन (Rule of Law) को सिद्धान्त अनुकूल बनाई न्यायिक विकासक्रमलाई अन्तराष्ट्रिय मापदण्डमा पुर्याउने चेष्टा यसै समयमा गरियो। प्रशिद्ध संविधानविद् डाइसेका प्रतिपादित कानूनको शासनको सिद्धान्तले प्रारम्भमा प्रशासकीय कानूनको अस्थित्वलाई स्वीकार गरेको थिएन परिणामस्वरूप प्रशासकीय स्वविवेक (Administrative Discretion) लाई यसमा स्थान थिएन। तर समयको अन्तरालमा प्रशासकीय कानूनको विकास भई यसको अस्तित्व अनिवार्य देखिएको कुरा डाइसेका उत्तरार्धका वर्षहरुमा लेखिएका कृतिले छर्लंग पार्दछन्। यसैगरी लर्ड हेवेटको पुस्तक "न्यू डिस्पोटिजम" (१९२९) ले वेलायतमा प्रशासकीय कानूनको विकास भएको कुरा स्पष्ट उल्लेख गरेको छ। प्रशासकीय कानूनको विकास पश्चात "कानूनको शासन" सम्बन्धी पुरानो सिद्धान्तमा केही संशोधन हुन पुगेको थियो। यिनै वेलायती अनुभवबाट लर्ड म्याकुलेको प्लान अन्तर्गत भारतीय कानूनहरुको संहिताकरण अभियान शुरु भएको थियो र भारतीय स्वतन्त्रता पश्चात संविधान निर्माण क्रममा व्यापक बहस भई बेलायती पद्धति अनुकूलका संविधानपूर्वका कानूनलाई निरन्तरता दिइयो, साथै संविधानले संसदीय व्यवस्थालाई

आत्मसात गर्यो। तर भारतीय संविधानले अंग्रेजी कानूनमा नभएको "विधायिकी कानूनको न्यायिक पुनरावलोकन" को सिद्धान्त अमेरिकी अनुभवबाट अनुशरण गरेको थियो। भारतीय कानूनमा प्रशिक्षित हरि प्रसाद प्रधानले यो विकासक्रम राम्ररी बुझेका थिए त्यसैले न्यायिक पुनरावलोकनको पहिलो प्रयोग पनि उहाँले गर्नुभयो।

कानूनको शासनमा स्वेच्छाचारी शक्तिको अभाव हुन्छ, सबैलाई समान रुपमा समान तवरबाट कानून लागू हुन्छ, कानून विना कसैलाई दण्ड गरिदैन, कानूनको उचित तरिकाबाट वस्तुनिष्ट तवरबाट प्रयोग हुन पर्दछ भन्ने सिद्धान्तलाई नेपालमा प्रयोग गरेर उहाँले देखाई दिनुभयो। वेदकृष्णको मुद्दामा (नि.नं. ४७, ने.का.प. २०१६) "कानूनको शासनको अर्थ नियमित कानूनको सर्वथा, सर्वोपरिता वा सर्वोच्चता हो जो मनमानापन वा सरकारले तजविज लगाउन पाउने बढी अधिकारको अस्तित्व मेट्दछ" भन्ने सिद्धान्त प्रतिपादन गरिएको छ। यसरी कानूनको शासनको सिद्धान्तलाई अभिव्यक्त गर्ने हरि प्रसाद प्रधान कार्यपालिकालाई एउटा चिल जस्तो देख्नुहुन्छ जसले चल्लारुपी जनतालाई खान खोज्दछ। यस्ता निरीह चल्लाको संरक्षकरुपी माउ न्यायपालिका हो भन्ने मान्यता उहाँले राख्नुभएको थियो। सरकारप्रतिको अविश्वास र जनताप्रतिको कमजोरी उहाँले देखाउन खोज्नुभएको हो होइन यथार्थ भन्न सकिन्न तर न्यायपालिकाको भूमिका जन हक संरक्षणमा कस्तो हुनु पर्दछ भन्ने उदाहरण उहाँले दिनुभएको कुरामा यथार्थता छ। अशिक्षित जनता र बढी शक्ति हडप्ने कार्यपालिकाको बीचमा पनि न्यायपालिका सजग र उत्तरदायित्वपूर्ण हुनु पर्दछ भन्ने सोचाई उहाँमा थियो।

कार्यपालिकाले शासन गर्दछ, विधायिकाले साधन स्रोतको बाँडफाँड गर्छ, आर्थिक मामिलामा नियन्त्रण लगाउँछ तर न्यायपालिका न साधन बाँडफाँड गरी राष्ट्रियिय कोषको जिम्मावाल बन्छ न जनता उपर तरवार चलाउँछ, यो केवल निर्णय गर्छ, तसर्थ सरकारको सबैभन्दा कमजोर अङ्ग हो भन्ने हेमिल्टनको फेडरालिष्ट पेपर नं. ७८ को धारणासँग हरि प्रसाद प्रधान पूर्ण सहमत भएको देखिँदैन। उहाँले न्यायपालिकालाई कमजोर अङ्गको रुपमा स्वीकार गर्नुभएको छैन भन्ने अडकल गर्न सकिन्छ।

कानूनको शासनको सिद्धान्तको अलावा परम्परागत देवानी र फौजदारी

अधिकारक्षेत्र बाहेक प्रधान न्यायालयले रिट अधिकारक्षेत्र समेत प्रयोग गर्न सक्ने कुरा हरि प्रसाद प्रधानको कार्यकालमा नै विकास हुन पुग्यो। न्याय प्रशासनमा रिटका सिद्धान्त, व्यवहार र प्रयोगमा भएका विषयगत आधारहरुलाई छर्लङ्ग्याउने काम यसै अवधिमा हुन् पुगेको देखिन्छ।

जनताका कानूनी हक बाहेक मौलिक हक पनि हुन्छन् भन्ने कुरा २००४ सालको वैधानिक कानूनले स्वीकार गरेको भए पनि सो लागू हुनपाएको थिएन। २००७ सालको संविधानले यो कुरालाई पुनः स्वीकार गर्यो, तर त्यस्तो मौलिक हकको संरक्षण विशेष तवरबाट हुनु पर्ने कुरा हरि प्रसाद प्रधानकालीन प्रधान न्यायालयले स्वीकार गर्यो। प्रधान न्यायालयले साधारण मात्र होइन असाधारण अधिकारक्षेत्र समेत ग्रहण गर्न सक्ने भयो। यो अदालतलाई अभिलेख अदालतको कोटीमा पुर्याउने कार्य समेत यसै अवधिमा शुरु भए।

राजाको सम्पूर्ण अधिकार भएको पूर्ण राजतन्त्र (Absolute Monarchy) मा समेत राजाले अदालत र न्यायिक कारवाहीमा हस्तक्षेप गर्न हुदैन भन्ने मान्यता बोकेका हरि प्रसाद प्रधानले न्यायपालिका माथि दरवारको हस्तक्षेपलाई प्रतिकार गरेका कुरा उहाँ सँगसँगै काम गर्ने व्यक्तिहरुबाट सुन्न पाइन्छ, यो कुरा मैले बराबर सुनेको छु।

न्यायकर्ता निर्भीक हुनु पर्दछ भन्नुको अर्थ नडराउने भनेको होइन। धर्मसँग, इश्वरसँग र कानूनसँग डराउनु पर्दछ भन्ने कुरा उहाँको आचरण, धार्मिक भावना, र साधु प्रवृत्तिबाट बुझ्न सकिन्छ। न्यायाधीशले कति जनसम्पर्क गर्नु पर्दछ र कति गर्नु हुँदैन गणितीय मापदण्डमा निकाल्न सकिँदैन। तर मुख्य कुरा सम्पर्कका कारण "न्याय विमुख" हुन् हुँदैन। हरि प्रसाद प्रधानको निवासमा "प्रवेश निषेध" लेखिएको र नितान्त आफ्नो काम गर्ने व्यक्तिगत मान्छे बाहेक कर्मचारी र झगडिया समेतसँग अदालतमा बाहेक उहाँले भेट्ने गर्नु हुने थिएन भन्ने कुराको स्मरण सोमनाथ घिमिरेले आफ्नो लेखमा "निष्पक्ष र निर्भीक न्यायकर्ता हरि प्रसाद प्रधान" (न्याय, भाग-४) मा लेख्नु भएबाट पुष्टि हुन जान्छ।

हरि प्रसाद प्रधान प्रक्रियामा भन्दा परिणाममा बढी जोड दिनुहुन्थ्यो, कानूनमा भन्दा न्यायमा बढी तल्लिन हुनुहुन्थ्यो, सिद्धान्तलाई व्यवहारमा उतार्न आवश्यक निहित अधिकार प्रयोग गर्नुहुन्थ्यो भन्ने कुरा सोमनाथ घिमिरेको माथि उल्लेखित

लेखमा उल्लेख गरेको लाल प्रसादको ज्यान मुद्दाको विवरणले स्पष्ट गर्दछ। उक्त मुद्दामा विधिवत पुनरावेदन नपरी निवेदनको आधारमा ठाडै निवेदन लिई अदालतबाटै अभियुक्तलाई सोधपूछ गरी फैसला सुनाएको कुराले पुष्टि गर्दछ।

हरि प्रसाद प्रधानको यो कार्यशैलीलाई भारतका भूतपूर्व प्रधान न्यायाधीश पि.एन. भगवतीले पत्रद्वारा लेखिएको कुरालाई नै रिट निवेदन मानी सार्वजनिक सरोकारको विवादमा निर्णय गरेको कुरासँग तुलना गर्न सकिन्छ। यी दुईमा के फरक छ भने पि.एन. भगवतीले, सार्वजनिक महत्वको र सरोकारको विवादमा यो अधिकार प्रयोग गरी Public Law को विकास गराए, हरि प्रसाद प्रधानले फौजदारी मुद्दामा एक व्यक्तिको विषयलाई लिएर यो अधिकार प्रयोग गरे। यो प्रयोगलाई "न्यायिक सक्रियता" को दर्जामा राख्न सकिन्छ जस्तो मलाई लाग्दछ। यसलाई "न्यायिक स्वेच्छाचारिता" भन्ने नामाकरण पनि गर्न सकिएला। यसरी मुद्दा हेर्दा प्रक्रियाको पनि ख्याल गरिएन भन्न सकिन्छ तर समुच्चा हरि प्रसादको कार्यशैली र व्यक्तित्वको आधारमा विश्लेष्ण गर्दा "न्याययिक सक्रियता" को नाम दिन सकिन्छ।।

हरि प्रसाद प्रधानको कार्यकालमा कसैको जीउ वा वैयक्तिक स्वतन्त्रताको अपहरण गरी अधिकारको अनुचित प्रयोग वा दुरुपयोग गर्ने अधिकारीलाई अदालतले जरिवाना समेत गर्ने गरेको थियो। कार्यपालिकाको अधिकारीले (Sovereign Immunity) को उपयोग गरी मनपरी गर्ने परम्पराको विरोधमा यस्तो पद्धतिको श्रीगणेश भएको थियो जुन पछि धेरै समयसम्म पुनः प्रयोगमा आउन सकेन। प्रशासकीय स्वेच्छाचारिता विरुद्धको यो कदम पनि एक अनुपम उदाहरण हो।

निडर र स्वच्छ स्वभावका हरि प्रसादलाई हरि प्रसाद बनाउन तत्कालीन समयले पनि साथ दिएको हो। तर उहाँमा त्यो क्षमता नभएको भए समयले मात्र केही गर्दैनथ्यो होला। स्व. श्री ५ त्रिभुवनको गणतन्त्रात्मक विधान अनुकूल शासन गर्ने इच्छाको अभिव्यक्त मेरो विचारमा त्रिभुवनको आफ्नो विचार थिएन, हतारमा सल्लाहकारको "कि त अनभिज्ञता" कि त "बढी चतुरता" को कारण अभिव्यक्त भएको थियो किनभने राजा स्वयंले राजतन्त्रभित्र गणतन्त्रात्मक विधान बनाउने कुरा सान्दर्भिक देखिँदैन। राजतन्त्रभित्र गणतन्त्रात्मक विधान कसरी बन्न सक्दछ ? कि त संवैधानिक राजतन्त्रलाई "राजतन्त्रात्मक गणतन्त्र" भनिएको हो भन्नु पर्यो। त्यस्तो

अन्यौल (विधिशास्त्रीय एवं संवैधानिक हिसावले) को स्थितिमा स्वच्छ र निष्पक्ष न्यायालयको लागि अनुकूल वातावरण तयार पार्न सजिलो थिएन। हुनत जतिखेर राजनीतिमा अन्यौलको वातावरण हुन्छ त्यतिवेला राजनीतिमा अन्यौलको वातावरण हुन्छ त्यतिवेला अदालत बलियो र प्रभावशाली हुन्छ भन्ने कुरा संयुक्त राज्य अमेरिका र हाम्रो आफनै अनुभवले सिद्ध गरेको छ। बलियो कार्यपालिका भएको बेला भन्दा कमजोर भएको बेलामा नै क्रान्तिकारी निर्णय अदालतले दिन सक्ने वातावरण रहन्छ। हरि प्रसाद प्रधानको प्रधान न्यायाधीशकाल (२००८-२०१३) को पुर्वार्धमा राजा त्रिभुवनको प्रभाव थियो। सो बेलामा राजाद्वारा न्यायालयको हक छिन्न नसक्ने स्थिति पैदा भएको थियो। तर प्रधान न्यायालयको असाधारण अधिकार हरि प्रसाद प्रधानको न्याय प्रशासनमा बढी भएको सम्झने जमात तयार भयो। फलस्वरूप २०१० सालमा यो अधिकार झिकियो। तर यो अधिकार नभई नहुने प्रकृतिको भएको र मौलिक हक संरक्षणार्थ प्रयोग हुने भएकोले “असाधारण अधिकारक्षेत्र” को पुन: २०१२ सालमा व्यवस्था हुन पुग्यो। यसो हुनमा तत्कालीन राजनीतिक व्यवस्था र त्यसका प्रभावशाली व्यक्तिहरुको ठूलो हात रहेको छ।

हरि प्रसाद प्रधानको न्यायिक व्यक्तित्व (Judicial Statesmanship) को कारण तत्कालीन परिवेशमा न्यायालयको विरुद्ध केही राजनीति भएको थियो भन्ने मैले सुनको छु। हरि प्रसाद प्रधानको प्रधान न्यायाधीशको नियुक्ति प्रधान न्यायालयको लागि थियो, सर्वोच्च अदालतका लागि थिएन। त्यसैले गर्दा २०१३ सालमा सर्वोच्च अदालतको विधिवत् स्थापना पश्चात उहाँको प्रधान न्यायाधीशको पद रिक्त हुन पुग्यो। यस प्रकार २००८/४/७ देखि २०१३/२/७ सम्मको करीब आधा दशकसम्मको उहाँको प्रधान न्यायाधीशकालमा नेपाली विधिशास्त्रमा निकै महत्वपूर्ण विकास भएको देखिन्छ।

हरि प्रसाद प्रधान पुन: २०१८/८/२९ देखि २०२०/८/२९ सम्म दोस्रो पटक प्रधान न्यायाधीश हुनुभयो। यस अवधिको हरि प्रसाद युवा जोश जांगरको थिएन, देश बाहिरबाट देशलाई आवश्यक परेर बोलाइएको पनि थिएन, जागिरको लागि नियुक्ति दिइएको थियो। अब उसमा स्वदेशीपन आइसकेको थियो, त्यो स्वदेशीपन राणाशासनकालदेखि नै ग्रसित मनोबल भएको थियो, अथवा अरु साधारण मान्छे झैँ

दाल, भात र रोटीको भक्तिले जेलिएको थियो- सैले यो  दोस्रो अवधिलाई हरि प्रसाद प्रधानको न्यायिक जीवनमा त्यति उल्लेखनीय मान्न सकिँदैन ।

## मूल्यांकन

एङलो अमेरिकन विधिशास्त्रको विधिवत थालनी गरी नेपालमा रिट अधिकार क्षेत्रको प्रयोग गर्ने, कानूनको शासनलाई जीवन्तता दिने निर्भीक र साहसी हरि प्रसाद प्रधानलाई अमेरिकी न्यायाधीश जोन मार्शल र बेलायती न्यायाधीश लर्ड डेनीङसँग तुलना गर्न सकिन्छ । समय, परिवेश र देशका कारण उनका निर्णय अन्तरास्ट्रिय टिका-टीप्पणी योग्य हुन नसके पनि भर्खर प्रजातन्त्रतर्फ लागेको तत्कालीन नेपालको न्यायपालिकाको अस्तित्वलाई वेग्लै पहिचान दिने मूर्धन्य व्यक्तिको रुपमा उहाँलाई लिइनु पर्दछ । अस्तु ।

# प्रधान न्यायाधीश हरि प्रसाद प्रधानको कार्यकालका दुई अप्रकाशित पत्रहरु

**शेषराज सिवाकोटी**

*वि.सं. २००७ साल पछिको स्वतन्त्र प्रधान न्यायालयका प्रथम प्रधान न्यायाधीश तथा नेपालको न्यायिक इतिहासका अमर व्यक्तित्व श्रद्धेय न्यायमूर्ति स्वर्गीय हरि प्रसाद प्रधानको पहिलो कार्यकाल (२००८-२०१३) को आरम्भका वि.सं. २००८ साल भदौ २१ गते जारी गरिएको आदेश नम्बर ३-४ का दुई अप्रकाशित आदेशपत्रहरुको नक्कल उतार यहाँ प्रस्तुत गरिएको छ ।*

वि.सं. २००७ सालको क्रान्ति पछिको संक्रमणकालीन अस्त-व्यस्तताको समयमा नेपालको न्यायिक क्षेत्रको नेतृत्व सम्हाल्नु भएका स्वतन्त्र न्यायालयका प्रवल हिमायती न्यायमूर्ति हरि प्रसाद प्रधानले "कुहिरोको काग" जस्तो रुपमा नेपालको तत्कालीन न्यायिक जगतमा पदार्पण गरेपछि नेपालको न्याय व्यवस्थालाई स्वतन्त्र न्यायालयको अवधारणा अनुरुप सुदृध र विकसित बनाउँदै लाने क्रममा मौलिक चिन्तन, मनन,निरन्तर लगन, समर्पणका साथ कटिवद्ध हुनुको अतिरिक्त सामान्य बन्दोबस्ती कुरा लगायत विभिन्न विषयमा निकै जागरुकता र अभिरुचिका साथ जानकारी लिई यथोचित निर्देशन दिने गरेको पाइन्छ । यसै क्रममा २००७ सालको क्रान्तिको दौरानमा आगो लगाइएका अदालतहरुमा डढेका छिन्न बाँकी दायरी मिसिलहरुका सम्बन्धमा के गर्ने भन्ने सम्बन्धमा यहाँ प्रस्तुत गर्न लागिएको आदेश नं. ३ को पत्रमा मातहातका अदालतहरूलाई निर्देशन दिइएको पाइन्छ भने आदेश नं. ४ को सोही मितिको दोस्रो पत्रमा "न्याय विभागको नयाँ बन्दोबस्त भएको नियमहरु तयार नभएसम्म" का लागि गुज्रेको म्याद तारेख सम्बन्धमा कार्यविधिगत निर्देशन दिइएको पाइन्छ ।

वि.सं. २००७ सालपछि नेपालको न्यायिक इतिहासको आधुनिक युगको प्रामाणिक अध्ययन अनुसन्धानको निमित्त उपयोगी देखिएको हुँदा नक्कल उतार नै भए पनि यहाँ प्रस्तुत गर्ने प्रयास गरिएको हो । नक्कल सार्नेको भाषिक अज्ञानताले गर्दा निकै अशुद्ध रुपमा (अदालती पारामा !) सारिएको पाइन्छ ।

धनकुटा जिल्ला अदालतको संग्रहमा रहेको प्रमाणित नक्कल “अदालत धन्कुटा आदेश नकल किताब” बाट यो नक्कल उतार यहाँ प्रस्तुत गरिएको हो ।

(१)

श्री हाकीम

प्रधां न्यायालय

प्रधां न्यायालय श्रेस्ता फाट

२१-५-०८

माहासय

आदेश नं. ३

उप्रान्त ठाउँ ठाउँ अदालत अपिलमा मिसिल आगलागी भएको वेहोरा जाहेर हुन आएको र तेस विस्येमा जनताको पर्न आयको विंतिपत्र निवेदनपत्रहरु अघि जाहेर भएकोमा मिसिल कागज आगलागी वारे बन्देवस्त हुने भै रहकाले पछि सूचना भए बमोजिं गर्नु भंन्ने आदेश भै रहेको व्यहोरा समेत गुज्रन आयको हुनाले आन्दोलन भै मिसिल कागजहरु आगलागी भएकोमा वादी प्रतेवादीसंग रहेको रित पूर्वकको निस्सा प्रमां र भए सम्मको कागज प्रमाण पत्ता लगाई मिसिल खडा गरी अैं सवाल बमोजिं कार्वाइ गर्नु मुद्धा नछिनी नक्कल नपाउने ठाडो बुझिएको मुदामा र अरु कुनै प्रमाण पत्ता नलागी मुद्धा खडा हुन नसकेको हक्मा सुचना पायका मितिले १ एक महिना भीत्र अर्को नालेस दिनु भनि आदेसको सुचना सवै झगडियालाई जनाउ दि सो म्याद भीत्र नालेस पर्न आय दर्ता गरि अैं सवाल बमोजिं कार्वाइ गरि दिनू सर्कार वादि भै कार्वाइ भएको मुदा जतिमा जो बुझ्नू पर्ने उजूर वाला र प्रतेवादि ग्वाहि सरजमिं स्मेत बुझि मिसिल

खडा गरि हेरि दिनु भनि तेस अड्डा मातहतका सबै अदालत अपिलहरुलाई लेखि पठाउंनू होला ।

भवदिय
हरि प्रसाद
प्रधां न्यायाधीश

(२)

श्री हाकीम
प्रधां न्यायालय
प्रधां न्यायालय श्रेस्ता फाट २१-५-०८
माहासय
आदेश नंवर ४
उप्रान्त न्याय बिभागको नञ्या वन्दोवस्त भएको नियमहरु तयार नभएसम्म तपसिलका कुरामा तपसिल वमोजिं गर्नु होला ।

<u>तपसिल</u>

भूल भन्ने वाहेक अरु कारण परि म्याद तारेख गूज्यो थामि पाउ भनि पैल्हा पटक ५० दिं भीत्र र तेस्पछि ३ पटकलाई १५/१५ दिं भीत्र जम्मा ४ पटक सम्म आफैंले रुजू भै कार्वाइ गराएकोमा आफै र वारेस दुवारा कारवाई गरायको भए वारेस दुवारा अडैमा दरखास्त पर्न आय तेस अडाको मुख्य हाकिंले बेहोरा साचो भए पहिला पटक ३५ दिं भीत्रकोमा जरिवाना नगरी र ३५ दिं नाघि ५० दिं भीत्रको रु. १ येक र तेस्पछिलाई रु. २ दुईका दर्ले अैं वमोजिं जरिवाना गरि थामि दिनु होला । भुल भन्ने कारण मूनासिव नपर्ने हुनाले भूल भन्ने कारण लेखि ल्यायमा र पैल्हा पटकको वाहेक तेस पछिका पटकको थमाउन हुलाकद्वारा पठाएमा स्मेत थामिन सक्तैन । ..................................१ समनको म्यादमा हाजिर नहुने साछीहरुलाई दोहरा समन जारि गरि झिकाउने स्मेत अैं भै रहेकोमा सोहि वमोजिं गर्ने र सो वाहेकका अरु सवै मूदामा पनि समनको म्यादमा

जाहेर नहुने साक्षीलाई अैं बमोजिं जरिवाना गरि फेरि १ पटक अडैबाट १५ दिने समन जारि गरि बुझ्नू पर्छ सो वमोजिं नगरि मामिला फैसला गर्न हुदैन । ..................................
......................................................२

अैले वुझ्नु पर्ने झगडियाले दिएको कागजी प्रमाण र साछीहरु नवुझी फैसला गर्ने हाकिंलाई पछि सोहि साछी प्रमाण वुझिदा मुद्धा उलटिन गयो भने वात लाग्छ । ..........
..................................३

माथी लेखिया बमोजिं हुने भयको वेहोरा आफ्ना अडा ईलाका भित्रका रैति दुनिञ्याहरुले थाहा पाउने गरि गाउँ मौजाहरुमा जनाउँ स्मेत दिनू भनि तेस अडा मातहतका सवै अपिल अदालतहरुलाई लेखि पठाई तेस अडाबाट पनि माथी लेखिया वमोजिं गर्नु होला । ........................................४

भवदिय
हरि प्रसाद
प्रधां न्यायाधीश

# हरि प्रसाद प्रधान – स्वतन्त्र न्यायपालिकाको कोशेढुंगा

**शंकर कुमार श्रेष्ठ**

हरि प्रसाद प्रधान नाम र काम दुवै परिप्रेक्ष्यमा नेपालको स्वतन्त्र न्यायपालिकाको मानसपटलबाट कहिले पनि ओझेल नपर्ने अविचलित कोशेढुंगा भएको अर्थमा यस छोटो लेखमा उनको नामको अगाडि स्वर्गीय शव्द राख्नु सार्थक नभएको हुंदा राखिएको छैन । उनी स्वतन्त्र न्यायपालिकाको सन्दर्भमा सधै नै सार्थक र वर्तमानको रुपमा रहिरहने परिवेशमा परिवर्तनको सम्भावना कतै देखिए जस्तो लाग्दैन ।

उनको दृष्टान्तको अर्को व्यक्तित्वको क्रममा महाकवि लक्ष्मी प्रसाद देवकोटाको नाम लिइदा पन्त, प्रसाद र निराला जस्ता महाकविहरुको संयुक्त जोडको रुपमा मानिए जस्तै प्रधानलाई कतिहरुको वरावर एक जोड भनेर निकाल्न खोज्दा पनि कतिहरु अझै पनि किन वरावरमा आएर उनको निमित एक जोड बन्न सकेका छैनन् भनेर प्रश्न कोही कसैले गरे पनि उत्तर पुन नसकिएला । संभवत: उनी एक पूर्ण न्यायमूर्ति हुनुपर्छ तथा पूर्णता उनको परिचय र पर्याय थियो भन्दा अन्यथा नमानिएला ।

त्यसवेलाको उदाहरण अहिले प्राक्ष्येपण गरेर समान परिणतिको खोजी गरिनु हुन्न भन्ने विपरितवोधक तर्क दिने महानुभावहरु यहां प्रशस्त पाइन्छन् । यसको उत्तरमा यति मात्र भन्दा पनि पर्याप्त होला, उनी सरह त्यसवेलाका अरु त्यस अर्थमा उल्लेख्य भएका छैनन  र अहिलेको त्यसरी विपरितवोधक तर्कधारीहरु पनि वर्तमानमा वर्तमानकै अर्थमा सुनामधन्य हुन सकेका छैनन् ।

संकुचित र फराकिलो मानसिकता र वौद्धिकताको खोज गर्ने हो भने उनी जति पढेकाहरु हामीमध्ये अति धरै नै छौं, तर हामी उभिएको धरातलको जग उनले आफ्नो अस्तित्वको एउटा मात्र खम्बा गाडेको जग भन्दा धेरै नै सतही छ भन्न पर्दा हामीले

किमार्थ लाज मान्नु हुदैन । वौद्धिकताको मात्र व्याख्या गर्ने भए हामी पनि कम छैनौं भन्ने उदाहरणहरु हामीसित प्रशस्त छन, तर मानसिकताको धरातलमा गज कमजोर भएमा बौद्धिकताको शक्ति या त निरंकुश हुन् जान्छ वा निरर्थक हुन जान्छ भन्ने कुराको उदाहरण दिइरहनु नपर्ला । विकशित मुलुकहरुमा पर्यावरण वा वातावरण संरक्षणको कुरा नउठ्दाकै अवस्थामा २०१० सालमा वन फडानी मुद्दामा वन मासिदै गएमा पानीको श्रोत कम हुन गई जनतालाई मर्का पर्न जाने हुदा वन जंगल कायम गरी राख्नु भन्ने प्रकृतिका अति वैज्ञानिक सोचाइ समेत  राख्न सक्ने उनको न्यायिक मनको व्याख्या संभवत शब्दमा गर्न सकिन्न ।

आज पदको मर्यादा राख्ने अर्थमा संकुचित भएका आक्षेपहरु हामीले नसुनेका होइनौं । यसको संगै निष्पक्षताको नाममा सामाजिक परिवेशसितको वितृष्णायुक्त सम्बन्धले व्यक्तित्व विकासमा पारेको नकारात्मक प्रभावको कुरा यहाँ नगरिनु नै वेस होला । नत्र एउटा ज्यान मुद्दाको सन्दर्भमा तात्कालिक वेलायती महामहिम राजदुतसित पत्राचार गरी तोकिएको कानून व्यवसायी राख्न पत्र मार्फत सल्लाह दिन सक्ने निष्पक्षताको हैसियत भएको उनको विशालतालाई हामीले आजसम्म धेरै पटक क्रमिकता प्रदान गरिसक्ने थियौ । निष्पक्षताको उदाहरण सामाजिक वितृष्णा कदापि होइन । समाजको नाममा इन्साफ दिनेले सामाजिक परिवेशबाट टाढा रहनु भन्ने सुन्दा पनि अनौठो लाग्ने विषय हुन जान्छ ।

स्वतन्त्रताको संवैधानिक ढाल हामीले आज बोकेका छौं, तर उनको पालामा त्यस्तो स्थिति थिएन । यस अर्थमा पदीय स्थितिको स्थायित्वमा पनि सधै अनावश्यक लचकताको डरले जाल फिजाइ राखेको हुन्थ्यो । तथापि स्वतन्त्रताको भोग गरेको भनिएको वर्तमानले देखाएको परिणाम उनको पालामा भन्दा पनि उल्लेख्य नहुनुका उदाहरणहरु प्रशस्त भेटिन्छन । शान्ति सुरक्षा र थुनछेक जस्ता कतिपय मुद्दाहरुमा भएका निर्णयहरु आज पनि फलामको लकिरको रुपमा गनिन योग्य छन् । त्यसै उनले चिल रुपी सरकारबाट बचाउन जनतालाई चल्ला मानी अदालतलाई माऊको दर्जा दिएका थिएनन् ।

उदाहरणले उनी सुनामधन्य भएका होइनन् । उनका कामहरु स्वयं स्वतन्त्र न्यायपालिकाको जग वलियो वनाउन राखिएका इटाहरु हुन । त्यसमा इटाहरु थप्ने

कामहरु होउन भन्ने शुभकामना व्यक्त गर्नु निरर्थक नमानियोस । एकजना अधिवक्ता मित्रले डेरामा वसेर जीवन निर्वाह गरी डेराबाटै देहत्याग गरेका रुद्र वहादुर सिंहको उदाहरण प्रस्तुत गर्दा गौरव मान्नु भएको प्रसंग एक थप इटा हुन सक्ला, तर स्वयम हरि प्रसाद प्रधान स्वतन्त्र न्यायपालिकाको कोशेढुंगाको रुपमा अद्यापि अविचलित स्थितिमा हुनु उनको सन्दर्भमा गौरवपूर्ण उदाहरण मानिएता पनि त्यस कोशेढुंगा अलिकता पनि अगाडि वढाउन नसकिनुलाई वर्तमानमा सन्तोषप्रद मान्न नसकिएला । उनका कतिपय निर्णयहरु नजीर मात्र नभएर अभिलेखालयमा राखिनु पर्ने हैसियतका छन भन्दा अन्यथा नमानिएला ।

अन्त्यमा, हरि प्रसाद प्रधानप्रति प्रशंसाका शव्द चयन गर्न पनि कमी हुन् सक्लान भन्ने डरबाट भने मैले फुर्सद पाउन सकेको छैन ।

अस्तु

# हरिप्रसाद प्रधान
# (१८९३ -१९६३)

**पारसमणि शम**

प्रतिभाशाली र क्षमतावान व्यक्तिले जहाँ पनि जे पनि गर्नसक्छ अनि उसको जहाँ पनि कदर हुन्छ । विश्वको कुनै पनि ठाउँमा गएर प्रतिभाशाली व्यक्तिले आफ्नो व्यक्तित्वको प्रभाव छाइने गरेको हुन्छ । आज यस्ता प्रतिभाशाली व्यक्तिको जतातते माग छ ।

दक्षिण सिक्किमको तुरुकमा जन्मिएका हरिप्रसाद प्रधान यस्तै दुर्लभ प्रतिभा थिए । सन् १९६०- सम्म यिनको माग सिक्किम,भारत, नेपाल र भोटाङ चारै देशमा रहेको थियो । आफ्नो ७० वर्षे जीवनकालमा हरिप्रसाद प्रधानले यी चारै देशका लागि काम गरे । सिक्किममा उनी जमीनदार, बड़ी हाकीम, काउन्सिलर, योजनाकार, कानूनविद् र न्यायाधीश बनेर काम गरे । तत्कालीन ब्रिटिश भारतको दार्जीलिङमा उनी वकील, समाजसेवी, राजनीतिज्ञका रुपमा रहे । यहाँ उनले नेपाली भाषा- साहित्यका लागि काम गरे । नेपाली साहित्य सम्मेलनको स्थापनाका सभापति भई दार्जिलिङ बसुञ्जेल योगदान दिए । दार्जीलिङ नगरपालिका र डिस्ट्रिक्ट बोर्डका उपाध्यक्ष बने । एसेम्बली चुनाउमा खड़ा भए । दार्जीलिङलाई बंगालबाट अलग गर्न पर्छ भनी सर्वप्रथम सन् १९१७ -मा सरकारमा विन्ती-पत्रको ड्राफ्ट मात्र नभएर विचार पनि उनकै थियो साथै आन्दोलनमा पनि सामेल भए । विविध संध, संस्थाहरुसित सम्बन्धित रहेर उनले काम गरे । भोटाङका लागि उनले केही समय कालेबुङ बसुञ्जेल सन् १९३०-३५- मा भुटानका कानूनी सल्लाहकारका रुपमा कम गरे । नेपालका लागि पनि कानून विशेषको रुपमा काम गरे । चन्द्र शम्शेर महाराजको अनुरोधमा नेपालको कानूनहरुको पुस्तक छाप्न लिपि पनि तयार गरिदिएका थिए । कानून पनि बन्यो । अनि नेपालका

प्रधान न्यायालयका प्रथम प्रधान न्यायाधीशको शपथ ग्रहण श्री ५ त्रिभुवनबाट सन् १९५१- मा गराएदेखि सो प्रधान न्यायालय विघटन हुञ्जेल उनी नै त्यस ओहोदामा कायम रहे । पछि फेरि धिराज महेन्द्रको पालामा सर्वोच्च न्यायालयको न्यायाधीशका रुपमा काम गरे ।

यस्ता विलक्षण प्रतिभाका धनी युगौं-युगमा जन्मन्छन् । एकजनाले आफ्नो जीवनमा चारवटा राष्ट्रका लागि काम गर्नु कति आश्चर्य लाग्दो कुरा हो । त्यस समय थोरै नेपली शिक्षित थिए । यी शिक्षित नेपालीहरुमा उनी साँच्चै प्रतिभासम्पन्न र कार्य क्षमताले अरुलाई आफूतिर आकर्षित गर्नसक्ने व्यक्तित्वका धनि थिए । सन् १९५०-को दशकसम्मका उनी सबैभन्दा विद्वान व्यक्ति थिए भन्दा अत्युक्ति हुनेछैन ।

यहाँ ध्यान दिनुपर्ने कुरो के छ भने सन् १९४७- सम्म भारत-ब्रिटिशको अधिनमा थियो । अत: १५ अगस्त, १९४७ -मा भारत स्वतन्त्र भएको हो । सिक्किम त्यस समय स्वतन्त्र राष्ट्र थियो । १६ मई, १९७५- मा सिक्किम भारतीय संधमा विलय भएको हो । यसैले हरिप्रसादले आफ्नो कर्मभुमि त्यतिखेरका चार राष्ट्र भारत, सिक्किम, नेपाल र भोटाङलाई आफ्नो कर्मक्षेत्र बनाएका थिए ।

हरिप्रसाद प्रधानको जन्म सन् १८९३- मा तुरुक दक्षिण सिक्किममा भएको थियो । रामकृष्ण प्रधानका छोरा हरिप्रसाद प्रधानका हजूरबा लक्ष्मीदास प्रधानको विषयमा सिक्किम ग्याजेटरमा वर्णन गरिएको छ । दार्जीलिङ सरकारी हाई स्कूलबाट म्यात्रिक पास गर्ने अनि कोलकाता विश्वविद्यालयबाट एम.ए. र बी. एल. सम्मको अध्ययन गर्ने प्रधान त्यस समयका एकाध सिक्किमेहरुमा एक हुन् । उनको विवाह नेपालको मल्ल परिवारकी अमृत लक्ष्मीसित काठमाडौंमा भएको थियो । उनलाई त्यस समय नेपालका राणा प्रधानमन्त्री चन्द्र शमसेरले बड़ा हाकिमका रुपमा कान गर्ने आग्रह पनि गरेको बताइन्छ । तर उनले सिक्किममा जमीनदारी नै गर्ने तथा दार्जीलिङको कार्य पनि आफैले गर्नुपर्ने बताएर चन्द्र शमसेरको आग्रहलाई अस्वीकार गरेका थिए । नेपालका राणा शासकहरुसित उनको राम्रो सम्बन्ध भएको बताइन्छ ।

उनको मूल कर्म क्षेत्र भनेको दार्जीलिङ, सिक्किम र नेपाल रहेको थियो । अध्ययनपछि उनले १९३०- ३५ सम्म कालेबुङमा बसेर काम गरे । यसरी नै १९४४ सम्म दार्जीलिङमा उनले आफ्नो व्यापार हेरेका थिए । १९४५- देखि ५० सम्म गान्तोकमा रहे

भने १९५१ पछि मृत्युपर्यन्त (१९६३) उनी काठमाडौंमा रहे । उनी नेपालको सर्वोच्च न्यायालयका न्यायाधीश बनेका थिए । सिक्किममा तत्कालीन महाराजा छोग्याल कालमा उनी काउन्सिलर बनेका थिए । सन् १९४८ सम्म उनी काउन्सिलर थिए ।

अध्ययनपछि उनले दार्जीलिङमा वकालती काम काम शुरु गरेका थिए र त्यस समय उनले बंगालबाट दार्जीलिङ छुट्टै नभएसम्म दार्जीलिङको विकास हुन् नसक्ने र दार्जीलिङवासीको सुरक्षा हुँदैन भन्ने विश्वास गर्दथे । यस क्रममा १९१७- मा ब्रिटिश सरकारलाई चढ़ाइएको एउटा ज्ञापनमा दार्जीलिङलाई बंगालबाट छुट्टयाउने माग गरेको छ । भनिन्छ उक्त ज्ञापन पत्रको ड्राफ्ट हरिप्रसाद प्रधानले नै बनाएका थिए औ सो विचार पनि उनकै थियो । दार्जीलिङलाई बंगालको दासत्वबाट अलग गर्नु पर्छ भन्ने उनले त्यस समय आफ्नै परिकारले एउटा आन्दोलन नै चलाएका थिए । तर त्यस समयको समय परिवेशसँग यी सबै कुरा हुनसकेनन् । यस क्रममा उनले हिलम्यान एसोसिएशन, ब्रिटिश एसोसिएशन, प्लाण्टर एसोसिएशन तथा गोर्खा लीगसित मिलेर कार्य गरेका थिए । १९३४- मा फेरि एउटा ज्ञापन पत्र ब्रिटिश सरकारलाई चढ़ाइएको थियो । १९४०- मा आएर ब्रिटिश सरकारका तत्कालीन गवर्नर क्यासेले डिस्ट्रिक्ट ओटोनोमी दिने भए पनि गोर्खा लीगको अस्वीकारबाट सो प्राप्त हुनसकेन तर हरिप्रसाद प्रधान लगायत हिलम्यान एसोसिएशनका धेरैजना सो अटोनमी स्वीकार गर्ने पक्षमा देखिन्थे । पछि १९४६- मा पनि एकपल्ट फेरि यस्तै मौका आएको थियो । तर त्यतिखेर दार्जीलिङलाई आसाममा मिलाउने गोर्खा लीगका डम्बरसिंह गुरुङको जिद्दीको कारण सो हुननसकेको ऐतिहासिक तथ्यहरु पाइन्छन् । १९५०- मा भारतका विदेश उपमन्त्री डा. बीभी. केश्कर सिक्किम आउँदा हरिप्रसाद प्रधानले सिक्किममा दार्जीलिङ फिर्ता गर्ने प्रस्ताव राखेका थिए तर सो सफल भएन । सिक्किम एउटा छुट्टै देश भएको हुँदा दार्जीलिङलाई सिक्किममा फिर्ता गर्नसकिने स्थिति नभएको बताइयो ।

१९२० र १९३० – को दशकमा उनी डिस्ट्रिक्ट बोर्ड र दार्जीलिङ नगरपालिकाका उपाध्यक्ष बने । यो पदमा पुग्ने उनी पहिलो नेपाली थिए । यसै समय उनलाई राई साहेबको पदवी प्रदान गरिएको थियो । यस समय दार्जीलिङ, सिक्किम र नेपालका गरी प्राय: १०० घरले मिलेर राति डाका मार्थे र अर्को राज्यमा लुक्ने गर्थे । उनले तीनै राज्यसित सम्पर्क गरी एकैसाथ छापा मार्न लाउँदा १९२४ – मा धेरै डाका पक्रा परेका

थिए । त्यस समय उनी पश्चिम सिक्किममा सरकारी स्टेटको म्यानेजर पदमा थिए । च्याखुङबाट सुम्बुक घर फर्किंदै गर्दा उनलाई पक्रा नपरेका डाकूहरुले जोरथाङ नजिकै आक्रमण गरेका थिए । पहिलो गोली चल्नासाथ उनी चढ़ेको केशरी नामको घोड़ा तेज गतिमा कुदेको थियो र उनी बाँचेका थिए । ती डाकूहरु पक्रनमा सघाउ पुर्याएकोले भारत सरकारद्वारा अमेरिकन पेस्तोल प्रदान गरिएको छ । १९३७ – मा बंगाल एसेम्बलीको चुनाउमा उनी खड़ा भए तर उनले चुनाउ भने जित्न सकेनन् । उनी कालेबुङमा रहँदा भोटाङ राजाका कानूनी सल्लाहकार १९३०-३५ पनि रहेको थाहा लागेको छ । यो कुरो १९३० – देखि ३५ – सम्म कालेबुङ बस्दातिरको कुरा हो । उनलाई त्यतिखेर कालेबुङ को-अपरेटिब ब्याङ्कको अध्यक्ष पनि बनाइएको थियो । १९२४ – मा दार्जीलिङमा स्थापना भएको नेपाली साहित्य सम्मेलन र १९४७ – तिर गान्तोकमा स्थापना भएको अपतन साहित्य परिषदमा हरिप्रसाद प्रधान संस्थापक अध्यक्ष रहेको बताइन्छ । कोलकाता विश्वविद्यालयमा त्यतिखेर नेपाली भाषालाई पहाड़ी नेपाली भनिन्थ्यो तर पहाड़ी शब्द हटाएर नेपाली मात्र राख्नमा यिनले निकै ठूलो भूमिका निर्वाह गरेको बताइन्छ । सुम्बुक इस्टेटमा उनले १९२३ – देखि ४३ सम्म आफ्नै खर्चमा एउटा स्कूल पनि चलाएका थिए । यता दक्षिण सिक्किमको रातेपानीमा स्कूलको निम्ति उनले जमीन र धन दिएका थिए । आज उनले दिएको साँढ़े चार ऐकर जमीनमा रातेपानी स्कूल र अस्पताल निर्माण भएको छ । दार्जीलिङको एउटा लाइब्रेरी (मनोविनोद) -लाई तीनवटा आलमारी साथै पुस्तकहरु दिएका थिए ।

उनी कतिसम्म प्रकाण्ड विद्वान थिए भन्ने कुरो त नेपालका तत्कालीन प्रधानमन्त्री चन्द्र शमसेरले उनलाई नेपालको ऐन-कानूनहरुको खेस्रा तयार गर्न लगाएकोबाट स्पष्ट हुन्छ ।

१९४४- तिरको कुरा हो, त्यतिखेर उनलाई उनीसित सूर्यविक्रम ज्ञवाली र धरणीधर कोइरालालाई पक्राउ गरी नेपाललाई हस्तान्तरण गर्न जेनेरल बहादुर शमसेरले ब्रिटिश सरकारलाई अनुरोध गरेका थिए । ब्रिटिशलाई गोर्खा पल्टनको खाँचो परेकोले नेपाललाई खुशी राख्नुपरेको थियो । यस क्रममा उनी लगायत धरणीधर र सूर्य विक्रमलाई गिरफ्तार गरी, अलिपुरद्वार जेलमा राखिएको थियो । पछि उनलाई सिक्किमका राजकुमार पी. टी. नामग्यालले सिक्किमको विकासमाथि एउटा गुरु

योजना तयार गरिदिने अनुरोध गरेर डेभलोपमेण्ट कम को-अर्डिनेशन अफिसरका रुपमा नियुक्त गरे । पछि फेरि उनलाई सिक्किमको उच्च न्यायालयमा मेजिस्ट्रेट बनाइयो । यसैबेला उनले गान्तोकको विकास क्षेत्रको परिकल्पना तयार गरेका थिए । यसका साथसाथै सिक्किम राष्ट्रियकृत परिवहनको गठनमा पनि उनको योगदान रहेको बताइन्छ । एसएनटी – का म्यानेजर मि. फोर्डले यसबारे उनको पुस्तकमा लेख्नुभएको छ । सिक्किमका काउन्सिलर भएर उनले सिक्किमका विभिन्न ठाउँको भ्रमण गर्दै यहाँको विकास र समृध्दिको लागि महत्वपूर्ण पहल गरे । उनले सिक्किमलाई लामो समयसम्म कर्मभुमि बनाउन सकेनन् । तर थोरै समयमा सिक्किमको लागि धेरै गरेर गए ।

१९५१मा नेपालमा प्रजातन्त्र आएपछि उनलाई विश्वेश्वरप्रसाद कोइरालाले नेपालमा राखे । उनलाई त्यसबेलाका गृहमन्त्री कोइरालाले नेपाललाई काम सघाउनु भनी उच्च न्यायालयको प्रधान न्यायाधीश पदमा नियुक्त गरे । त्यसबेला उनलाई नेपालका राजा त्रिभूवनले उच्च न्यायालयको प्रधान न्यायाधीशको सपथ दिलाएका थिए । केही वर्षपछि नेपालमा उच्च न्यायालयको साटो सर्वाच्च न्यायालयको स्थापना गरियो र पछि उनैलाई दुई वर्ष प्रधान न्यायाधीश पनि बनाइयो । सर्वाच्च न्यायालयमा दुई वर्ष जति प्रधान न्यायाधीशको कार्यभार सञ्चालन गरेपछि उनले एक दिन १९६३-मा तत्कालीन राजा महेन्द्रलाई राजीनामा लेखेर पठाए । राजा महेन्द्रले उनको राजीनामा अस्वीकार गर्दा उनले- 'मेरो जाने बेला भइसक्यो, केही फरक पर्दैन' बताएका थिए, भनिन्छ । राजाले उनको राजीनामा अस्वीकार गरेको भोलिपल्ट उनको निधन भएको थियो । उनको वासस्थान झमसीखेल (ललितपुर)- देखि संखमुलसम्मको सवयात्रामा सरकारी ब्याण्डले पनि भाग लिएको थियो ।

- - -

इतिहास निर्माता: सिक्किमका प्रमुख दिवंगत स्रष्टा र द्रष्टाहरु, ऐतिहासिक खोज एवं मुल्याङ्कन, सम्पादक: टी.बी. चन्द्र सुब्बा, प्रकाशक: किनार प्रकाशन, गान्तोक (सिक्किम), प्रकाशक मण्डली: श्रीमती दुर्गा राई (सुब्बा), दीपेन्द्र सुब्बा, आदित्य वीर विक्रम सुब्बा, प्रकाशन वर्ष: सन् २००८ (१९ मई, बुद्ध पुर्णिमा), लेजर सेटिङ्ग: लक्ष्मीप्रसाद गुरागाई, सुकना (दार्जिलिङ), मुद्रक : पपुलर प्रेस, विधान रोड, सिलगढ़ी, (पेज नं. ११५-११८) ।

## धीरधाम बोर्ड अभ् ट्रस्टीजका संस्थापक सभापति राय साहेब हरि प्रसाद प्रधान एम. ए. बी. एल. ले तारिख १६ फेब्रुअरी १९३९ को दिन धीरधाम मन्दिरका उदघाटन अवसरमा दिनु भएको भाषण-

**हजूर महिलावृन्द तथा उपस्थित सभ्य सज्जनगण,**

धीर धाम मन्दिरको उदघाटनका अवसरमा यो पहाडका कुना-कुना बाट यतिका मानीस यहां जम्मा भएको यो यौटा अनुपम मौका छ। विगत शताब्दीमा आफ्नू मातृभूमि बाट आई यो पूर्व हिमालका अञ्चलमा बसो बासो गरी बस्ने नेपालीहरुप्रति प्रेम प्रदर्शन गरी तथा प्रशस्त धन खर्च गरी उनीहरुको धार्मिक अभ्युदय र सांस्कृतिक उन्नति होस् भन्ने मुरादले श्री ३ महाराज जुद्ध शंशेर जंग बहादुर राणाद्वारा स्थापित यो मन्दिरले गर्दा पूर्व हिमालयको समस्त धार्मिक नेपाली जनता श्री ३ महाराजको कृतज्ञ भएको छ। श्री ३ महाराजको निगाह न भएको भय हाम्रा मानीसले हाम्रो प्राचीन रीति थीति र चाल चलन सुहाउँदो धीर धाम जस्तो संस्कृतिको केन्द्र कति सय वर्षसम्म पनि बनाउन नसक्दा हुन् पश्चिमी शिक्षा पाएको तथा पश्चिमी विचारमा रंगिएको अचेलको मानीसले मन्दिर स्थापनाद्वारा सांस्कृतिक उन्नति हुन्छ भन्ने कुरामा सन्देह गरे ता पनि यो प्राचीन भारतवर्षको सामाजिक तथा जातीय इतिहास पल्टाए हामीले हिन्दू तथा बौद्ध दुवै सांस्कृतिका केन्द्र मन्दिर, मठ, आश्रम तथा विहारहरु थिए तथा जुनबेला सम्म यिनको उन्नति थियो भारतवर्ष समस्त संसारको आदरको पात्र थियो औ इनका ह्रास संगसंगै भारत माताको सामाजिक धार्मिक औ सांस्कृतिक अवनति पनि हुन् थाल्यो औ वर्तमान शोचनीय अवस्था प्राप्त भयो भन्ने कुरा थाहा पाउने छौं। हिमालयका यो अञ्चलका निवासीहरुको धार्मिक अध:पतनले गर्दा यहांका केही विचारशील मानिसहरु यो हुन् न पाओस् भनी चिन्ता गर्न लागेका थिए औ धर्म संग सम्बन्ध नभएको सांस्कृतिक केन्द्र मात्र स्थापित गर्ने उनीहरुको प्रयत्न निष्फल भयो किन भने हाम्रा जीवनका प्रत्येक दैनिक कार्यको धर्मसंग गाढ़ा सम्बन्ध छ औ धर्मका जगमा नबसालिएको संस्था सुदृढ़ र बलियो हुँदैन। अतएव हामी धर्मका जगमा यौटा संस्था

खडा गर्ने कुरा विचार गर्न थाल्यौं औ हाम्रो प्रार्थनाले उदारहृदय श्री ३ महाराज जुद्ध शंशेर जंग बहादुर राणाको दया जगायो र यौटा मन्दिर तथा धर्मशाला बनाउन जग्गा खोज्नु भन्ने श्री ३ महाराजको हुकुम भयो । धेरै खोजी गर्दा बल्ल नगरका मध्यमा भएको तथा १०७ पोल जमीन भएको यो फ्री होल्ड ठाऊँ पाइयो । श्री ३ महाराजाले यो ठाऊँमा मन्दिर र धर्मशाला बनाउन हुन्छ भन्ने ठहराए पछि यो किन्न स्टेंप, रेजिस्ट्रेशन इत्यादिमा भएको र अरु साना तिना खर्च समेत ३१३०० रुपियांमा यो स्थान ता. २५ सितम्वर १९३५ मा किनियो तथा वहां पछि सोही दिन यसको जिम्मा यौटा बोर्ड अभ ट्रस्टीजका हातमा दिइयो औ हाल सोही बोर्ड काम गर्दैछ । त्यो बोर्डमा म बाहेक निम्नलिखित आठ सदस्य हुनू हुन्छ ।

1. सरदार बहादुर गणेशबहादुर छेत्री ।
2. सरदार बहादुर हनजित देवान राई ।
3. पण्डित धरणीधर शर्मा बी. ए., बी. टी ।
4. श्री सूर्य्य विक्रम ज्ञवाली बी. ए., बी. टी. ।
5. श्री पद्य प्रसाद प्रधान बी. ए., बी. एल. ।
6. श्री हस्तलाल गिरि ।
7. श्री मोतीलालछेत्री ।
8. श्री धन नारायण प्रधान ।

यो बोर्ड अभ् ट्रस्टीका जिम्मा श्री ३ महाराजका स्वर्गवासी पिता कमांण्डर इन चीफ धीर शंशेरजंग बहादुर राणाका स्मरणार्थ स्थापित भएको धीर धाम नामक संस्थाको ट्रस्ट डीडमा लेखिएका शर्त बमोजिम बन्दोबस्त गर्ने भार सुम्पिएको छ । वहाँ पछि श्री ३ महाराजबाट यौटा मन्दिर र पूजारीहरू बस्ने घर बनाउन ३०,०००) रुपियां बक्सियो तथा त्यतिले ना पुग्दा फेरी रु. १६.८६५//=) । । । बक्सियो । अतएव जम्मा रु. ४६,८६५//=) । । । का खर्चले यो मन्दिर खड़ा भएको छ औ श्री ३ महाराजले यसको वार्षिक खर्चका निम्ति प्रवन्ध गरी दिने वचन वक्सिएको छ ।

यो मन्दिरको नकशा नेपालका विशिष्ट ग्रह निर्माण कलाका आधारमा बंगाल सरकारका भूतपूर्व आर्किटेक् श्री डवल्यु. आई. केरले बनाएको हो तथा श्री केरका

अनुपस्थितिमा वाहाँका नायब इन्जीनियर श्री प्रिय भूषण गुहाका योग्य निरीक्षणमा यसको निर्माण भयो । यसका उदघाटनका अवसरमा पनि स्वास्थ्य राम्रो न भएको हुंनाले श्री केर साहेब उपस्थित हुन् सक्नु भएन । नेपली कलाको उदाहरण स्वरूप खड़ा भएको यो मन्दिर वहांकै तर्जुमाको परिणाम हो । यो मन्दिर बनाउने भार दार्जीलिङ्का प्रसिद्ध ठिकादार राय साहेब पूर्ण बहादुर प्रधानले वहाँको टेंडर श्री ३ माहाराज बाट स्वीकार हुँदा पाउनु भयो तथा यसलाई बनाउन परिश्रम र कुशलताको अभाव नभएको कुरा यो मन्दिर बाट नै सफा जाहेर हुन्छ । वहाँले योग्यतापूर्वक यो काम गरेको हुँदा वहाँको प्रशंसा छ तथा यो सुन्दर भवन वहाँका कुशल कार्यक्षमताको उदाहरण स्वरूप भै चीरकाल सम्म रहने छ । यो कार्य गर्दा नाफाको कति विचार नगरी राय साहेब पूर्ण बहादुर प्रधानले जुन कुरो जती जहाँ लाउन पर्ने हो सो लाई तथा बडी कुशलता देखाई यो मन्दिर बनाउनु भएको छ । बोर्ड आव ट्रस्टीजक सदस्यहरु वहाँका काम देखि सन्तुष्ट छन् तथा हजूरद्वारा यो कुराको जाहेरी श्री ३ महाराजमा होस् भन्ने उनीहरुको निवेदन छ ।

मन्दिरको स्वर्णमय गजुर, मंडपमा ढोकाको सुन्दर तोरण तथा तहाँ रहेका महापुरुषहरु औ फोहोराको शिवमूर्ति तथा मन्दिरमा अरु ठाउँ ठाउँमा भएका सुन्दर कलापूर्ण कामहरु श्री भेषराज शाक्यभिक्षु द्वारा भएका हुन् तथा कोंक्रीटमा यसको सुन्दर कलापूर्ण काम गरे बापत बोर्ड आव ट्रस्टीज वहाँका कामप्रति पनी हजुरको दृष्टि आकर्षित गर्छ । अनेक किसीमका मनोहर फूल र सुन्दर विरुवाहरु दान दिई धीर धामको शोभा बढाई दिएको हुँदा सिकीमका चन्द्र नरसरीका मालिकहरु प्रति पनी बोर्ड आव ट्रस्टीज अनुगृहीत छ तथा वहाँहरुका दानकालागी हजूर द्वारा श्री ३ महाराज प्रभुको ध्यान आकर्षित गर्छ ।

नेपाली यात्रीहरुका निमित्त धर्मशाला बनाउने कार्य अझ बाँकी नै छ तथा स्वास्थ्यले वाधा न गरे त्यसको नकशा बनाउन श्री केर साहेबलाई भनी सकिएको छ औ सो तयार भए पछि खर्चको अडकल समेत तेसलाई श्री ३ महाराजका सम्मुख छिट्टै उपस्थित गर्ने धीर धाम बोर्ड आव ट्रस्टीजका सदस्यहरुको आशा छ ।

प्राचीन भारतवर्षमा मन्दिर, मठ तथा आश्रमहरु संस्कृतिका ठुला केन्द्र हुन्थे तथा तिनमा मानिसहरु आध्यात्मिक बल र तेज प्राप्त गर्न जान्थे । यो मन्दिरले पनि

यो जिल्लाका निवासीहरु र यो नगरमा आउने भारतका विविध प्रान्तका मानीसहरुका हृदयमा ठूलो आध्यात्मिक भाव जागरित गराइ सबैमा प्रेम सञ्चार गराउला भन्ने आशा छ ।

श्री ३ महाराज र यो मन्दिरका ट्रस्टीजहरु कसैमा साम्प्रायिक भाव छैन तथा कुनै प्रकारको साम्प्रदायिक विचार न बढाई यो संस्था बाट सनातन धर्म र संस्कृतिको प्रचार भयो भने उनीहरुलाई प्रसन्नता हुने छ । यहाँ शिव लिंग स्थापना गरिएको हुनाले अरु पन्थका अनुयायीहरुले श्री ३ महाराजबाट उनीहरुका पन्थको अवहेलना भयो भनी ठान्नू पर्ने केही कारण छैन किन भने श्री ३ महाराजको मूल अभिप्राय ता हिन्दु संस्कृतिको अभिवृद्धि छ औ यसको आधार समस्त सृष्टिलाई कायम राख्ने शिवशक्तिको आध्यात्मिक भाव हो । मन्दिर भित्र चार कुनामा स्थापित गरिएको विष्णु (पालन गर्ने) देवी (शक्ति) गणेश (ज्ञान) र सूर्य (तेज) द्वारा यो संसार जुन महानशक्ति द्वारा पालन गरिएको छ त्यो शक्तिका विविध रुपको दर्शन हुन्छ । यी शक्तिका अभावमा सृष्टिको कल्पना नै असंभव छ । यता बाट हाम्रा प्रजावत्सल श्री ३ महाराज जुद्ध शंशेर जंग बहादुर राणाको उदार बुद्धि प्रगाढ विचारका कल्पना तहाँहरु गर्न सकनू हुने छ । श्री ३ महाराजको यो मन्दिर स्थापना गर्न स्वयं सवारी हुन् नसकेको हुँदा हामी सबै दु:खित भए ता पनि श्री ३ महाराजले आफ्ना प्यारा जेठा छोरा कमांडिंग जेनरल बहादुर शंशेर जंग बहादुर राणालाई यो मन्दिर उदघाटन गर्न पठाई हाम्रो दु:ख बिर्साई बक्सियो । यो कामका लागी तकलीफ सही नेपाल देखी हजुरको यहाँ सवारी भएको हुँदा हामी सबै अनुगृहीत छौं ।

हजुरलाई मन्दिर उदघाटन गर्न प्रार्थना गर्न भन्दा अघी मैले भूतपूर्व डिपुटी कमिश्नर तथा बा बंगाल लाठका वर्तमान सेक्रेटरी श्री एल. जी. पिनेल महोदय, सी. आई. ई.,आइ. सी. एस:,चकदिघ्घीका राज बहादुर मणिलाल सिंह राय, दार्जीलिङका डिपटी कमिशन श्री ए. एस. लार्किन महोदय आइ. सी. एस., श्री जे. चेम्बर्स, सुपेरिटेडीगं इन्जिनियर दार्जीलिङ म्युनिसिपेलिटीका इन्जिनियर श्री एस. के. दत्त, एम. बी.ई. तथा इलेक्ट्रिक इन्जिनियर राय साहेब एस. एन. मंडललाई वहाँहरुले यो कार्य सम्पादन गर्न समय समयमा गरेका सहायताका निम्ति धन्यवाद गर्न मेरो कर्तव्य हो । यो कामका थालनीमा परेका अनेक विघ्न बाधादि उपर्युक्त सज्जनहरुका सहायता र सहयोगले

निवृत्त भये औ आज यो मन्दिर खडा भयेको देख्दा हामी सवैको चित्त अत्यन्त प्रसन्न छ। राजगुरु पण्डित हेमराज सी. आई. ई. महोदय तथा श्री ३ महाराजका प्राइवेट सेक्रेटरी बडा काजी मरीचिमान सिंह सी. आई. ई. महोदयहरू प्रति पनी धीर धाम बोर्डका ट्रस्टीजहरु आफ्नु कृतज्ञता निवेदन गर्छन् किन भने समय समयमा उनीहरुका सम्मुखमा उपस्थित भएका अनेक जटिल प्रश्नका विचारमा वहाँहरुबाट उनीहरुलाई बडो सहायता भएको छ। यो सभामा उपस्थित भई सभाको शोभा बढाउनु भए बापत म उपस्थित सज्जनगण र महिलावृन्दलाई धन्यवाद निवेदन गर्छ। अरु सज्जनहरु जसले धीर धाम बोर्डका ट्रस्टीजहरुलाई समय समयमा सहायता दिनु भयो, वहाँहरुलाई पनि धन्यवाद चढाउँछु। यो उत्सव समारोहका समय समयमा नाना प्रकारको सहायता गरे बापत छात्र सम्मेलन, महिला समिति तथा अरु स्थानीय संस्थाहरुका सदस्यहरुलाई अनेकानेक धन्यवाद छन्।

ट्रस्टीजहरु र दार्जीलिङका नेपाली जनताबाट अब यो मन्दिरको हजूरबाट उदघाटन होस् भन्ने मेरो विनम्र प्रार्थना छ तथा हामीहरुको भक्तिपूर्ण स्नेह श्री ३ महाराजका जुनाफमा हजुर द्वारा जाहेर होस् भन्ने पनि हार्दिक निवेदन छ। जो निगाह।

धीरधाम बोर्ड अभ् ट्रस्टीज, दार्जीलिङ

**स्वर्ण जयन्ती स्मारिका**

धीरधाम, दार्जीलिङ

१९३९-१९८९

**मेरा दृष्टिकोणहरु**
**मेरा अवधारणाहरु**

# सम्झनामा पनि बिर्सिसकेका सिक्किमे वीर छोराहरु

**शैलेश चन्द्र प्रधान**

सिक्किमको बहुआयामिक विलक्षण प्रतिभा भएको एउटा वीर छोरा हुन्- स्व. हरिप्रसाद प्रधान। भारतको राष्ट्रिय स्तरमा भारतीय नेपालीमाझ उहाँ विभिन्न विधाहरुमा सर्वप्रथम भनौं भारतीय नेपालीमाझ प्रथम व्यक्ति हुनुहुन्थ्यो। शैक्षिक क्षेत्रमा उहाँ नै प्रथम एमएमबीएल गर्ने व्यक्ति। सामाजिक क्षेत्रमा उहाँ नगरपालिकाका (त्यस समय नगरपालिकाका अध्यक्ष डिस्ट्रिक्ट म्याजिस्ट्रेट हुने सरकारी प्रावधान थियो) प्रथम नेपाली उपाध्यक्ष, साहित्य क्षेत्रमा नेपाली साहित्य सम्मेलन दार्जीलिङका मुख्य संस्थापक सदस्य, राजनैतिक क्षेत्रमा हिलम्यान एसोसिएशनका मुख्य संस्थापक र सार्वभौमिकतासम्पन्न राष्ट्र नेपालको उच्चतम न्यायालयका प्रथम प्रधान न्यायाधीस।

जुन समयमा हरिप्रसाद प्रधान एमए पढ्दै थिए त्यसबेला भारतका विद्यालय, महाविद्यालयतिर नेपाली विषय पढ़ाउने नियम नै थिएन तर उहाँको नेपालका साहित्यिक साथीहरुको संसर्गमा औ निजी अध्ययन र परिश्रमले नेपाली भाषा एवं साहित्यमा राम्रो दखल थियो। सिक्किमको जेठो नेपाली साहित्यिक संस्था अपतन साहित्य परिषद्का उहाँ सभापति हुँदा परिषद्को कविता संग्रह 'इन्द्रकील'- मा जुन स्तरमा उहाँले भूमिका लेख्नुभएको थियो त्यो भूमिका पढ्दा उहाँ भाषा, शैली र विषयमा वस्तुको कति गहिरो ज्ञान र विश्लेषण गर्ने क्षमताको पुष्टि गर्छ। स्व. काशीराज प्रदानको

सम्पादनमा प्रकाशित हुने सिक्किमको ऐतिहासिक मासिक 'कञ्चनजङ्घा' पत्रिकामा धारावाहिक रुपमा विभिन्न विषयलाई समेटेर लेख्नुभएको लेखहरु अध्ययन गर्दा भाषा र साहित्यबाहेक जीवनका विभिन्न विधाहरुमा उहाँको विद्वता प्रष्ट देखापर्छ ।

नेपाल राष्ट्रको एउटा प्रमुख पत्रिका 'हिमाल खबर पत्रिका' – ले १-१५ वैशाख २०५७ (१३-२७ अप्रेल, २०००) वर्ष ९ अंक २५ वर्षको नेपाली विशेषांकमा लेखिएको छ-

'सिक्किममा जन्मिएर दार्जीलिङमा वकालत पेशा शुरु गरेका हरिप्रसाद प्रधान नेपालका प्रथम प्रधान न्यायाधीश हुन् । उनले नेपालमा आधुनिक न्याय प्रणालीको जग बसाले । कार्यपालिका र राजाबाट समेत न्यायपालिकालाई स्वतन्त्र राख्न प्रधानले गरेको प्रयास अहिले पनि अनुकरणीय मानिन्छ । नागरिकको हक, अधिकार कुण्ठित पार्ने ऐन कानूनका कयौं प्रावधानलाई न्यायाधीशको हैसियतले उनले अवैध र अन्याय घोषित गरे । कानूनी सल्लाहसम्बन्धी पेशालाई उनले नेपालको न्याय प्रणालीमा प्रवेश गराए' ।

शैक्षिक साहित्य, सामाजिक र कानून एवं न्यायका क्षेत्रलाई छोड़ेर स्व. हरिप्रसाद प्रधान मानवीय दर्शनका पक्षधर हुनुहुन्थ्यो र उहाँको दृष्टिमा मान्छे जबसम्म आर्थिक रुपमा बलियो हुँदैन तबसम्म मान्छेले अरुले गरेको भाषण आफ्नै भाषा र शैलीमा लेख्नेहरुले लेखेको सस्तो पर्चा कसले पो लेख्यो चिनिहाल्ने, पर्चा पढ़ेर होहोरीमा लागेर निकालेको र्‍याली र जनसमावेशले मान्छेको परिभाषा दिनसक्दैन, खोक्रो प्रजातन्त्रको नारा लगाएर राति घर फर्कंदा घरको चिसो चुल्हाले स्वागत गर्दा मान्छेको मान्छेत्वको जिउँदो हत्या हुन्छ । मान्छे आर्थिक रुपले कमजोर छ भने उसको राम्रो बोली आउँदैन, बोल्ने आँट हुँदैन । मान्छेको नक्षीय दर्शनलाई बुझेर विशेष दक्षिण सिक्किमतिर ग्याडोलस फूलको दाना (flower bulbs) अमेरिका, होल्याण्डबाट आयात गरेर ग्याडोलस फूलको खेती शुरु गर्ने र गराउने एवं राम्रो जातको पानी अभाव क्षेत्रमा राम्रो फल्ने गोलभेंड़ा खेती गराउने एवं तोरी पेलेर तेल उत्पादन गर्ने कृषिजन्य आधारित योजनाहरु १९३५ को दशकतिर नै स्व. हरिप्रसाद प्रधानले श्रीगणेश गरेका थिए ।

यहाँ यो पनि स्मरण गराइन्छ, जब उहाँ दार्जीलिङ सत्र न्यायालयमा वकालती

गर्नुहुँदै थियो त्यतिबेला एशियाको एउटा विख्यात समाजवादी नेता, नेपाली साहित्यका लब्धप्रतिष्ठ कथाकार- उपन्यासकार एवं नेपालका जननिर्वाचित प्रथम प्रधानमन्त्री विशेश्वरप्रसाद कोइराला, उहाँकै सहायक अधिवक्ताको रुपमा दार्जीलिङको जिल्ला एवं सत्र न्यायालयमा वकालती गरेका थिए । यो घटनाक्रमबाट जान्न सकिन्छ, हरिप्रसाद प्रधानलाई विश्वको राजनैतिक वातावरण, राजनैतिक कुटनीतिको गहिरो अध्ययन थियो ।

सिक्किम सरकारले उहाँलाई महत्वपूर्ण न्यायसम्बन्धी विषयमा कानुनी सल्लाहकारको रुपमा सल्लाह लिनुबाहेक सिक्किम सरकारी पक्षका ठूला-ठूला जटिल मामिलाहरुमा सिक्किम सरकारले उहाँलाई स्थायी अधिवक्ता राख्दथियो । नामी जेरुङ देवान फौजदारी मामिलामा उहाँले सरकारी पक्षबाट वरिष्ठ अधिवक्ताको रुपमा पैरवी गरेर सो मामिला सरकार पक्षले न्यायालयमा जितेको थियो – यो ऐतिहासिक मामिलामा सिक्किमका पूर्व मुख्यमन्त्री स्व. एलडी काजीको परिवार पनि सम्बन्धित थियो ।

मेरा दृष्टिकोणहरु, मेरा अवधारणाहरु, पहिलो संस्करण : २००९, चाँप-गुराँस प्रकाशन, सुम्बुक-दक्षिण सिक्कि, मुद्रकः दास प्रिण्टर्स,सिलगढ़ी, फोन : २४३०६४१, पृष्ठः ५८-६२

**सिक्किमे व्यक्तित्व विशेषांक**

# हरिप्रसाद प्रधान

**डा. प्रतापचन्द्र प्रधान**

## जन्म र पारिवारिक पृष्ठभूमि:

सन् १८६४ को कोतपर्व हत्याकाण्डले नेपालमा अमानवीय वातावरणको सिर्जना गरी निरङ्कुश राणा शासनको जन्म दिएको थियो । तिनताक नेपालमा जङ्गबहादुर र उनको श्री ३ सरकारीय शासनको जगजगी बढ्यो । त्यस बखत राणाहरुको विरोध गर्नेहरुलाई कि त झुण्डाइन्थ्यो कि त देश निकाला गरिन्थ्यो । त्यसै घटनाको क्रममा धेरै नेपालीहरु देशबाट पलायन भएका थिए ।

त्यसबेला भादगाउँ (हालको भक्तपुर) – का निवासी लक्ष्मीनारायण कसजु (कायस्थ) – को छोरो लक्ष्मीदास (पछि सिक्किम- दार्जीलिङ पुगेपछि प्रधान भएका) – ले काठमाडौको मखन टोलमा पसल गरी बसेका थिए र उनको पसलबाट राणाहरुले उधारोमा सामान लिने गर्थे । साहुको बाँकी रकम तिर्नुभन्दा बरु साहुकै हत्या गर्नु उचित हुने ठानी ती राणाहरुले मार्ने षड्यन्त्र गरेको थाहा पाई लक्ष्मीदास पनि आफ्नो ज्यान जोगाउन काठमाडौबाट भागेर बराह क्षेत्र हुँदै हनुमाननगर पुगे । त्यहाँ केही कालको बसाइक्रममा कुनै एक साधु महात्माले उनलाई नेपाल बाहिर गए उनको भाग्य चम्किने भविष्यवाणी गरे । फलस्वरुप उनी दार्जीलिङ पुगे । ब्रिटीस- भारत र नेपालका बीचमा भएको सन् १८१५ को सुगौली सन्धिपश्चात्को दार्जीलिङमा भरखर मानव बस्तीहरु स्थापना भइरहेका र अधिकांस पहाड़ी भुमि जंगलले नै ढाकिएका थिए । दार्जीलिङको केन्द्रस्थल भन्नु नै तत्कालीन गुन्द्रीबजार थियो। लक्ष्मीप्रसादले आफूसंग भएको तरवार ५ रुपैयामा बेचेर त्यही पूँजीले गुन्द्रीबजारमा सानो खाद्यान्नको पसल खोले । उत्साही र उद्यमी लक्ष्मीदासको व्यापार राम्ररी चल्न थालेपछि उनले नेपालबाट आफ्नो भाई चन्द्रवीरका साथमा जहाँ-परिवार झिकाए । बसोबासका निम्ति हालको कन्भेन्ट

रोडमा जमीन किनेर घर बनाए ।

त्यसबेला सिक्किमका काजी खानदानकाहरु पनि दार्जीलिङ आउने-जाने गर्थे। लक्ष्मीदासको खाद्यान्न पसलको लोकप्रियताका कारणले गर्दा ती काजी खलकहरुले पनि उनकै पसलमा खाद्य सामग्री किन्थे । त्यही क्रममा उनको सिक्किमे राजाका देवान फुदुङ लामासंग गहिरो मित्रता कायम भयो । तिनै देवानका माध्यमबाट उनको सिक्किमे राजा नामगेलसँग सम्पर्क हुन पुग्यो । उनलाई इमान्दारी र विश्वासी पात्र पाएर राजाले उनलाई दक्षिणी सिक्किमको जग्गा कर उठाउने जिम्मेवारी सुम्पिए । भाई चन्द्रवीरलाई दार्जीलिङको व्यापार सुम्पिएर लक्ष्मीदास सिक्किम पसे अनि दक्षिण सिक्किमको तुरुकमा बस्न थाले। इमान्दारी, लगनशील र परिश्रमी भएकै कारणले लक्ष्मीदासले चाँडै दक्षिण सिक्किमको विकास गरे। सिक्किममा ताँबाको खानीको प्रशस्त सम्भावना देखिएकाले सिक्किमप्रति राजाले सन् १८७६ मा उनलाई ताँबा खानी खोल्ने अनुमति पनि दिए । त्यसपछि उनलाई सिक्किममा टक्सार सम्हाल्ने अभिभारा पनि दिइयो । उनले श्री श्री श्री सिक्किम सरकार अङ्कित ताँबाका गोला- चेप्टा सिक्काहरु बनाए, जुन नेपालको पूर्वी भागसम्मै चल्ती थियो। त्यस्तो सिक्किमको व्यवसाय गर्न थालेकाले सिक्किममा लक्ष्मीदास प्रधान र उनका भावी परिवारलाई 'टक्सारी नेवार' भन्ने प्रचलन रह्यो, लक्ष्मीदासका जम्मा ६ भाई छोराहरु – हरिदास, रामकृष्ण, काजिसिंह, मोतिसिंह, लम्बोदर र देवदास थिए । जेठो छोरो हरिदास प्रधानले हालको दार्जीलिङ, कन्भेन्ट रोड अन्तर्गतका सम्पूर्ण पाखा किनेका हुनाले उनैको नाममा त्यस ठाउँको नाम 'हरिदासहट्टा' राखियो र आजपनि दार्जीलिङमा 'हरिदासहट्टा' अर्थात 'हरदासट्टा' नाम प्रचलित छ। माहिलो छोरो रामकृष्ण प्रधानबाट हिरालाल प्रधान र हरिप्रसाद प्रधान गरी दुइ सन्तान जन्मिए। हरिप्रसाद प्रधानको जन्म सिक्किमको तुरुकमा वि.सं. १९५१ साल, श्रावण शुक्ल पक्षको प्रतिपदा आर्थात १ गतेका दिन (सन् १८९७ साल ) भएको थियो । तिनै लक्ष्मीदासका नाति, रामकृष्णका छोरो रायसाहेब हरिप्रसाद प्रधान र उनको संक्षिप्त जीवनी यस लेखको केन्द्रीय विषय बनेको छ ।

**बाल्यकाल र शिक्षा- दिक्षा:**

हरिप्रसाद प्रधान वर्ष दिनको उमेरमा पाइला टेक्दा नटेक्दै उनका पिता

रामकृष्णको निधन भयो र उनको बाल्यकाल पिताको न्यानो वात्सल्यबाट वञ्चित हुन पुगे तापनि माता भोजलक्ष्मीको ममतामयी छत्रछायाँमा उनलाई पिताको अभावको महसुस भएन । जे होस् शिक्षित र माध्यमवित्तीय पारिवारिक वातावरणमा जन्मेका हरिप्रसादलाई हुर्कन र पढ्नमा भने कुनै खास त्यस्तो वाधा आइपरेन । जीवनमा एकचोटि पनि अनुत्तीर्ण नभएका हरिप्रसादले दार्जीलिङ गभर्नमेन्ट हाई स्कूलबाट मेट्रिक परीक्षा र कलकत्ता विश्वविद्यालयको चर्चेस कलेजबाट स्नातकमा सम्मान (अनर्स) सहित उत्तीण गरी अर्थशास्त्रमा स्नातकोत्तर र कानूनमा पनि स्नातकोत्तर गरेका थिए । कलेजको विद्यार्थी अवस्थामा आइ.एस. पढ्दा उनले रसायन शास्त्र (Chemistry) जस्तो विषयलाई ऐच्छिक विषयका रुपमा लिएका थिए । तिनताक दार्जीलिङमा सबैले उनलाई हरिप्रसाद प्रधान, एम.ए. एल.एल.बी., प्लीडर भनी चिन्थे । स्कूले अवस्थादेखि नै एक, अनुशासित, होनहार र प्रतिभाशाली विद्यार्थी भएकाले उनलाई के शिक्षक के सहपाठीहरू सबैले सम्मान गर्ने गर्थे ।

**वैवाहिक जीवन:**

हरिप्रसाद प्रधानको विवाह नेपालको एक शिक्षित र घरानियाँ परिवारकी कन्या अमृतालक्ष्मी मल्लसित भएको थियो । उनका ससुरा पद्मसुन्दर मल्ल नेपालकै प्रथम इन्जिनियर थिए । हरिप्रसाद र उनकी पत्नी अमृतालक्ष्मीबाट दुई छोरा- अरुणचन्द्र प्रधान र तिलककुमार प्रधान जन्मिए ।

**पेसा:**

पेसाले हरिप्रसाद प्रधान एक कानूनव्यवसायी थिए । कलकत्तामा आफ्नो अध्ययनक्रम समाप्त गरी दार्जीलिङ फर्केपछि यहींको कचहरीमा र कालिम्पोङको कचहरीमा उनले कानुन-अभ्यास गर्न थाले । सत्यको पक्षधारी, उच्च महत्वाकांक्षी ,अदम्य साहसी, निर्भीक र लगनशील हुनाले हरिप्रसाद प्रधानले जीवनमा कहिल्यै हार खाएनन् । त्यसैले उनी सामान्य जिल्ला अदालतका वकीलदेखि सर्वोच्च अदालतका सम्माननीय प्रधान न्यायाधीशसम्म बन्न पुगे ।

सन् १९५० को तत्कालीन नेपाल अधिराज्यमा भरखर प्रजातन्त्रको लहर आइरहेको थियो ।

राजा त्रिभुवन पनि जनताको पक्षमा लागेर प्रजातन्त्रको बहाली गरिरहेका

थिए। १०४ वर्षको जहानियाँ राणातन्त्रबाट मुक्ति पाएको नयाँ नेपालले राष्ट्रनिर्माणकालागि सचेत, प्रबुद्ध र प्रतिभाशाली वक्तित्वहरुको खोज भइरहेको थियो। यसै क्रममा न्याय क्षेत्रमा पनि प्रधान न्यायालय (Chief Court of Nepal) को स्थापना भएपछी त्यसका प्रधान न्यायाधीश कसलाई बनाउने भन्ने राजाको प्रश्नमा कतिले भारतबाट झिकाउने र कतिले चाहिँ नेपालबाटै खोजेर निकाल्ने सल्लाह दिए। नेपालका तत्कालीन कट्टर प्रजातन्त्रवादी नेता तथा भूतपूर्व प्रधानमन्त्री विश्वेश्वरप्रसाद कोइरालाको मनमा झट्ट हरिप्रसाद प्रधानसँगको नाम सम्झनामा आयो, किनभने कोइरालाको दार्जीलिङ बसाइँक्रममा न्यायाधीश हरिप्रसाद प्रधानसँगको सान्निध्यले उनलाई पनि कानून व्यवसायमा ठूलो मदद मिलेको थियो। त्यसबेला निर्वासित जीवन बिताइरहेका विश्वेश्वरप्रसाद कोइरालाकै भनाइअनुसार बी.ए., बी. एल. को अध्ययन समाप्त गरिसकेका कोइरालाले दार्जीलिङमा आएर हरिप्रसाद प्रधानको प्रशिक्षणमा कानूनी अभ्यास गरेको र सूर्यविक्रम ज्ञवालीको प्रेरणाबाट नेपाली भाषामा साहित्य लेख्न थालेको जानकारी प्राप्त हुन्छ। कोइराला आफ्नो आत्मवृतान्तमा लेख्छन् :

'मैले एउटा तिब्बतीको मुद्दामा 'ब्रिफ' तयार गरेको संझना छ। त्यो एउटा ठूलो व्यापारी थियो। मैले पहिला 'फीस' पाएकै त्यसको केसमा हो। तयस बखतमा मेरा सिनियर थिए हरिप्रसाद प्रधान। उनले मलाई केही पैसा आउने केसहरु दिएका थिए। तर मलाई कोर्ट जान मन लाग्दैनथ्यो'।

-विश्वेश्वरप्रसाद कोइरालाको आत्मवृतान्त (दो. सं.) ललितपुर : जगदम्बा प्रकाशन प्रा.लि., वि. सं. २०५५ पृ. २६।

तिनै विश्वेश्वरप्रसाद कोइरालाको सुझाउ र सिफारिसमा राजा त्रिभुवनले सन् १९५१ (अर्थात् वि.सं., २००८ साल श्रावण ७ गते ) मा हरिप्रसाद प्रधानलाई बोलाएर नेपालमा सर्वप्रथम स्थापित 'प्रधान न्यायालय' का प्रथम प्रधान न्यायाधीश पदमा नियुक्त गरेका थिए र सन् १९५६ (अर्थात वि.सं. २०१३ साल जेष्ठ ७ गते) सम्म यो पद बहाली गरे। उनको प्रधान न्यायाधीशत्व कालमा नेपाल सर्वप्रथम न्यायपालिका समिति (Judiciary Committee) गठन गरियो। यो नवगठित समितिमा नेपालका कानूनसम्बन्धीका प्रतिभाशाली व्यक्तित्वहरु समाविष्ट थिए। समितिको

गठनपश्चात् प्रजातान्त्रिक नेपालमा कानून नपढ़ेकालाई अदालती कामकाजमा नराख्ने कुरा उठेको थियो, तर त्यस कुराले भविष्यमा समस्या निम्त्याउने सम्भावना पनि त्यतिकै थियो। त्यस सम्भावित समस्यालाई ध्यानमा राखेर प्रधान न्यायाधीश हरिप्रसाद प्रधानले एउटा नयाँ उपाए निकाले। कानून नपढ़ेका र प्रजातान्त्रिक प्रणालीका अदालती व्यवस्थाअन्तर्गतको कुनै पनि अदालती वा कानूनी अभ्यासको अनुभव नभएका कर्मचारीहरुलाई पनि अदालती सेवाबाट बर्खास्त गर्नाको सट्टा तिनलाई क्रमश: तालिम दिँदै नयाँ प्रणाली अनुसार सक्षम बनाउने र अदालती कर्मचारीवर्गमा सक्षम व्यक्तित्वको विकास गर्ने उनले नयाँ परिपाटी बसाले। त्यस लगत्तै नेपालमा वकालती प्रथा नभएका हुँदा जनसाधारणका पिरमर्कालाई भुझेर उनैले सर्वप्रथम नेपालमा अन्तराष्ट्रिय प्रजातान्त्रिक प्रणालीअनुरुप वकालती प्रथाको शुरुवात् गरे।

त्यसपछि नेपालका प्रधान न्यायालय खारेज भयो। सो न्यायालय खारेज भएपछि न्यायालयका प्रधान न्यायाधीशलगायत् अन्य न्यायाधीशहरु पनि स्वत: खारेजीमा परे। प्रधान न्यायालयको नयाँ भवनको निर्माणकार्य पुरा भएपछि त्यस प्रधान न्यायालयलाई सर्वाच्च अदालतका प्रथम प्रधान न्यायाधीशका मर्यादित पदमा सन् १९६१ मा तत्कालीन राजा महेन्द्रले हरिप्रसाद प्रधानलाई नै पुन: नियुक्त गरे। यस पदमा उनले सन् १९६३ (अर्थात वि.सं. २०२० साल मङ्सीर २९ गते) सम्म आफ्नो जिम्मेवार पदभार सम्हाले। नेपालमा नयाँ किसिमको कानून व्यवस्थाको शुरुवात् गर्ने क्रममा मुख्य श्रेय प्रधान न्यायाधीश हरिप्रसाद प्रधानलाई दिन सकिन्छ। उनैको सत्प्रयासमा नेपालको कानून क्षेत्रका शिष्ट व्यक्तित्वहरुले "नेपालको कानून व्यवस्थाका पिता" पनि भन्ने पनि गरेका छन्। हरिप्रसादले आफ्नो कानूनी व्यवसाय सिध्दान्त्मा सधैँ सत्यलाई सर्वोपरि महत्व दिएर काम गर्ने गर्थे।

## स्वभाव र रुचि:

सामान्यत: बुट्टेदार कार्चोपी टोपी, दौरासुरुवाल, इस्टकोट र कोत तथा गोलो चश्माको पहिरनमा रमाउने हरिप्रसाद प्रधान गम्भीर स्वभावका थिए। अङ्ग्रेजको पालामा सिक्किममा रहँदा- बस्दा भने मोटरको बाटोघाटो त्यति नभएकाले गर्दा उनले प्राय: ब्रिचिस नै लगाउने गर्थे – सायद घोड़सवारमा सजिलोका लागि पनि त्यो लगाएको

हुनुपर्छ। गहुँगोरो वर्ण भएका, पातलो काय र केही अग्ला देखिने, जुँगा पालेका हरिप्रसाद प्रधान कुनै ठाँटबाँटका साथ रवाफ देखाई हिँड्ने खालका व्यक्ति थिएनन्। अत्यन्तै आध्यात्मिक विचारधाराका उनी धार्मिक स्वभावका सरल, घमण्डरहित शान्त प्रकृतिका व्यक्ति थिए। अदालतबाट काम सकेर घर आउँदा जो दिएको खाना खाएर साधारण पहिरनमै भक्ति-भजनमा सामेल हुन पुग्थे। फुर्सदको समयमा उनी सामाजिक तथा राजनीतिक चिन्तनमा डुब्थे। स्वभाषा तथा साहित्यप्रति पनि उनको गम्भीर रुचि थियो। साहित्यको कुनै विधामा कलम नचलाए पनि साहित्यका पठन-पाठन र साहित्यिक संघ-संस्थासँग संलग्न रहिरहनमा उनले गहिरो अभिरुचि राख्थे। उदाहरणका लागि उनकै सक्रियता र सभापतित्वमा दार्जीलिङको नेपाली साहित्य सम्मेलनको स्थापना (२५ मई १९२४) र सिक्किमको अपतन साहित्य परिषद्को स्थापना (१५ अप्रेल १९४७) भएको थियो। रिस र घमण्डदेखि सयौं कोश टाढ़ा रहने हरिप्रसादले चित्त नबुझेका कुरामा कुनै प्रश्नकर्ताले सोधेको प्रश्नको जवाफ झर्को नमानी चित्तबुझ्दो तरिकाले दिने गर्थे। साधारण नेपाली खानपीनमा रुचि राख्ने हरिप्रसादको कुनै विशेष किसिमको खाद्यपरिकार र पेय पदार्थमा शौक थिएन। सरल रहनसहन मन पराउने तर उच्च विचार राख्ने हरिप्रसाद प्रधान नेपाली जातिका साँच्चै एक गौरव पुरुष नै थिए।

## मान-पदवी र सम्मान

हरिप्रसाद प्रधानका अदम्य साहस, दुरदर्शिता, सत्यवादिता, निर्भिकता, कर्तव्यपरायणता र स्वजाति र धर्मप्रतिको आस्थाको कदर गर्दै तत्कालीन ब्रिटिश-भारत सरकारले सन् १९२४ मा हरिप्रसाद प्रधानलाई 'राय साहेब' पदवीको पगरी पहिराइदियो। उनि नै त्यो पदवी प्राप्त गर्ने प्रथम भाग्यशाली नेपाली थिए। सम्पूर्ण नेपालीहरुकै लागि त्यो पदवी एउटा अभूतपूर्व र अविस्मरणीय उपलब्धि थियो।

सन् १९३८ मा सिक्किममा विशेष अदालत स्थापना भयो। त्यस अदालतका अध्यक्ष सिक्किम महाराज कुमार पी.टी. नामग्याल र अन्य दुइ माननीय सदस्यमा राय साहेव हरिप्रसाद प्रधान र रायबहादुर टाशी डाडुल डेनसापा थिए। यो सम्मान पनि पहाड़वासी नेपालीका निम्ति ठूलो गौरवको कुरो थियो। त्यसपछि उनी निम्नलिखित मर्यादित पदहरुमा रही सम्मान पाएर र आफूलाई सुम्पिएको जिम्मेवारी अनुशासित

ढंगले पूरा गरे ।

1. दार्जलिङ नगरपालिकाका प्रथम भाइस चेयरम्यान,
2. दार्जलिङ डिस्ट्रिक बोर्डका भाइस चेयरम्यान,
3. तत्कालीन नेपाल, भुटान र सिक्किमका मानार्थ कानुनी सल्लाहकार,
4. ३० वर्षसम्म सिक्किम दरबारका राज्य कानुनी परामर्शदाता,
5. नेपाली साहित्य सम्मेलनका संस्थापक अध्यक्ष,
6. सिक्किमको अपतन साहित्य परिषद्का सभापति,
7. नेपालका राजसभा स्थायी समितिका सदस्य, इ. ।
8. क्रियाकलाप, संलग्नता र सेवाकार्य:

भारतमा यत्रतत्र छरियर बसेका स्वजाति नेपालीहरुका हक, हित, सुरक्षा र उत्थानका लागि तत्कालीन ब्रिटिश-भारत सरकारविरुध्दको संग्राममा उत्रेका हरिप्रसाद जातीय भावनाले ओतप्रोत थिए । भारतस्थित कम्पनी सरकारले सिक्किममा पनि आफ्नो अधिनस्थ जमाएपछि ब्रिटिशराजले हरिप्रसादका बाजे लक्ष्मीदास प्रधानलाई सर्वप्रथम नेपाली समुदायबाट दार्जीलिङ नगरपालिकाका आयुक्त बनाए । त्यस्ता बाबु-बाजेको बिँड़ो थाम्ने सन्तान हरिप्रसाद पनि दार्जीलिङका सामाजिक-राजनीतिक क्षेत्रका एक प्रबुद्ध व्यक्तित्व थिए । अर्थशास्त्र, कानूनशास्त्र र धर्मशास्त्रका विज्ञ पाठक तथा ज्ञाता हरिप्रसाद प्रधान नेपाली जातिका समस्यालाई केन्द्रीय तथा प्रान्तीय सरकारका सामु पुर्याउनका लागि र जातीय अस्तित्व र उन्नतिलाई नै साध्य ठानेर राजनीतिमा लागे ।

सन् १९१७ मा पहाड़वासी नेपाली, भोटे, लाप्चे समुदायका मानिसहरुका हक,हित र सुरक्षाका निम्ति सरदार भीमदल देवानको अध्यक्षतामा 'हिलमेन्स एशोसिएशन' नामको संस्था गठन गरियो । यसका सक्रिय-सचेत महामन्त्री हरिप्रसाद प्रधान थिए । त्यस बेलाको दार्जीलिङका प्रबुध्द व्यक्तिहरु-सरदार भीमबहादुर देवान, राय साहेब हरिप्रसाद प्रधान, सरदार बहादुर लेडेनला, दलबहादुर गिरी आदि यस संस्थासँग सक्रिय रुपमा संलग्न थिए । यस संस्थाको मुख्य उदेश्य दार्जीलिङलाई बंगाल प्रान्तबाट अलग गनाई सम्पूर्ण पहाड़वासी नेपाली, भोटे, लाप्चे समुदायका मानिसहरुका लागि एउटा छुट्टै प्रशासकीय प्रान्त बनाउनमा निहित थियो । यस

संस्थासँग संलग्न रही हरिप्रसाद प्रधानले अदम्य साहस र उत्साहका साथ नेपाली जातिका हक, हित र सुरक्षाका लागि ब्रिटिश शासनविरुध्द निरन्तर युद्ध लड़िरहे ।

दार्जीलिङमा धेरै पहिलेदेखि नै जातीय जागरणका आवाजहरु उठ्न थालेका थिए । दार्जीलिङलाई छुट्टै प्रान्त बनाउने क्रममा त्यस बेलाका प्रबुध्द नेपालीहरुले ब्रिटिशशासित बंगाल सरकारसँग माग गर्दै आएका थिए । हरिप्रसाद प्रधान हिलमेन्स् एशोसिएसनका अध्यक्ष भएको बेला तत्कालीन ब्रिटिश- इण्डियाका भाइसरोय दार्जीलिङ भ्रमणमा आउँदा उनका समक्ष हरिप्रसाद प्रधानले बंगाल र आसामका पहाड़ी क्षेत्रका जनजातिहरुको समूहलाई एकीकृत गरी North East Frontier Province को नामले छुट्टै प्रान्त बनाउने प्रस्तावस्वरूप एउटा स्मरणपत्र चढाएका थिए । त्यस प्रस्तावमाथि कार्यान्वयन गर्नेबारे गोर्खा लिगका संस्थापक अध्यक्ष डम्बरसिंह गुरुङले पनि ब्रिटिश सरकारसँग धेरै माग गरेको थाहा हुन आएको छ । दार्जीलिङ भेगका नेपाली, भोटे, लाप्चे सम्प्रदायका पहाड़ीबासीहरुका भाषिक-साँस्कृतिक स्वरूप बंगाल प्रान्तका बंगालीहरुको भन्दा फरक किसिमको भएकोले पनि स्थानीय बासिन्दाहरुले ब्रिटिश शासनकालीन अवस्था-व्यवस्थाबाट अलग रही छुट्टै शासनव्यवस्था कायमहोस् भन्ने चाहना राख्दै आएको तथ्यलाई सन् १९१७ मा स्थापित ‘हिलमेन्स एशोसियसन’ देखि हालको ‘गोर्खाल्याण्ड’ मागसँग सम्बन्धित आन्दोलनसम्मका ऐतिहासिक गतिविधिले स्पष्ट पार्दै आएका छन् ।

सन् १९२० मा महात्मा गान्धीको आह्वानमा भारतीय राष्ट्रिय कंग्रेसले अगुवाइ गरेको असहयोग आन्दोलनले भारतवासीलाई जागरुक बनाएको थियो । त्यसको असर दार्जीलिङवासीमा पनि पर्यो । फलस्वरूप सन् १९२१ मा स्थानीय राजनीतिक नेताद्वय अगमसिंह गिरी र दलबहादुर गिरीले नेतृत्व गरेको आम हड़तालमा दार्जीलिङका सारा कमान-बस्तीका मानिसहरु ब्रिटिश शासनविरुध्द नारा-जुलुसका साथ खुल्ला रुपमा उर्लेर आए । सन् १९१९ मा पारित ऐनबमोजिम ब्रिटिश सरकारले दार्जीलिङ क्षेत्रलाई ‘एक्सक्लुडिड एरिया’ (वन्चित क्षेत्र) घोषित गर्यो र स्थानीय राजनीतिक क्रियाकलापमाथि प्रतिबन्ध लगाइयो । अंग्रेजहरुको यस किसिमको कपटपूर्ण व्यवहारले पहाड़वासीलाई झनै चिडायो । तर सन् १९३५ मा संशोधित ऐन विगतको अर्थात सन् १९१९ को ऐनलाई केही हदसम्म परिवर्तन गरी लचिलो बनाए

पनि दार्जीलिङको स्थानीय राजनीति भने उपेक्षित नै रह्यो ।

जातिको उत्थानका लागि मूलमा शिक्षा नै साध्य हो भनी ठान्ने हरिप्रसादले समाजमा जातीय भाषामा शिक्षा प्रचार गर्ने अभियानलाई पनि तीव्रताका साथ अघि बढ़ाए । उनकै नेतृत्वमा कलकत्ता विश्वविद्यालयअन्तर्गत दिइने मेट्रिक परीक्षामा नेपाली भाषालाई समावेश गर्ने, स्थानीय अदालत (कोर्ट)- मा नेपाली भाषालाई मान्यता दिने र भारतमा नै नेपाली भाषालाई मान्यता दिलाउने भाषिक सङ्घर्षको क्रममा उनले महत्वपूर्ण भूमिका निर्वाह गरे । उनका सभापतित्वमा पण्डित धरणीधर कोइराला, सूर्यविक्रम ज्ञवाली र पारसमणि प्रधानलगायत अन्य प्रबुद्धवर्गले ब्रिटिश-भारत सरकारसमक्ष भाषिक मान्यतासम्बन्धी लगातार प्रयास गरेर अन्ततः मान्यता प्राप्त गराइ छोड़े । अझ शिक्षा क्षेत्रमा 'हिलमेन्स एशोसिएसन'-को कोषबाट उनले विपन्न नेपाली छात्रछात्राहरुलाई गरीब छात्रवृत्ति पनि दिलाए । दार्जीलिङ भेगका जेहेन्दार युवा विद्यार्थीहरुको प्रतिभाको कदर गर्दै तिनलाई उच्च शिक्षा हासिल गर्ने अवसर दिई भारतभूमिमा नेपाली प्रतिभाको परिचय गराउने उद्देश्यले 'भीम छात्रवृत्ति कोष'- को स्थापना पनि उक्त तिनै सचेत बौद्धिक व्यक्तित्वबाट भयो । फलस्वरूप त्यही छात्रवृत्ति पाएर भारतका सुप्रसिद्ध वरिष्ठ मुटुरोग विशेषज्ञ डा. मणिकुमार छेत्रीले भारतमा नेपाली प्रतिभाको परिचय दिए ।

२५ मई १९२४ मा राय साहेब हरिप्रसाद प्रधानको सभापतित्वमा दार्जीलिङमा नेपाली साहित्य सम्मेलनको स्थापना भयो । यस सम्मेलनको स्थापनाकालदेखि २६ जुलाई १९३१ सालसम्मै उनी सभापतिको रुपमा रही नेपाली भाषा र साहित्यको संवर्ध्दना कटिबद्ध भई काम गरिरहे । त्यसपछि उनी लगभग १२ वर्ष (सन् १९४२/४३) सम्म भुटानका राजाको कानूनी सल्लहकार पनि भए ।

दार्जीलिङ म्युनिसिप्यालिटी तथा जिल्ला परिषद्का भाइस चेयरम्यानसमेत भई काम गरिसकेका हरिप्रसादका ती अदम्य साहस, उत्साह र सक्रियता देखेर ब्रिटिश प्रशासकहरु पनि दंग पर्थे । तर सन् १९१९ को ऐनले स्थानीय राजनीतिक क्रियाकलापमा प्रतिबन्ध लाएको त्यस्तो प्रतिकूल परिस्थितिलाई मध्य नजर राखेर दार्जीलिङको 'हिलम्यान्स एशोसिएसन' – का सचेत महामन्त्री हरिप्रसाद प्रधानले ब्रिटिशराजको पहाड़वासीहरुप्रतिको अन्यायपूर्ण व्यवहारप्रति गम्भीर खेद प्रकट गर्दै सन् १९३५ मा

दार्जीलिङको छुट्टै शासनव्यवस्थाको माग गरी 'ए ब्रिफ नोट अन दार्जीलिङ' शीर्षकको ज्ञापनपत्र कलकत्तास्थित कम्पनी सरकारलाई पठाए, जसमा नेपालीहरुको अस्तित्व र सुरक्षाको प्रश्नलाई पनि अघि सारिएको थियो ।

यस्तै गरी रायसाहेब हरिप्रसाद धार्मिक प्रवृतिका पनि भएकोले उनकै सक्रियतामा पण्डित धरणीधर कोइराला र सूर्यविक्रम ज्ञवालीको सहयोगमा नेपाली धार्मिक संस्कृतिलाई नेपालको परम्परागतको धार्मिक संस्कृतिसँग अक्षुण राख्नका लागि 'धीरधाम' मन्दिरको विधिपूर्वक स्थापना भयो । सो मन्दिरको उदघाटन समारोहमा नेपालका श्री ३ बहादुर शमंशेर जंगबहादुर राणाले श्रीपेचसहित जंगी पोशाकमै उपस्थित भई उदघाटन गरेका थिए ।

सन् १९३५ को संशोधित ऐनबमोजिम बंगालको प्रान्तीय चुनावको वातावरणलाई केही मात्रामा अनुकूल पार्ने गरी दार्जीलिङ क्षेत्रलाई आंशिक वञ्चित क्षेत्र (Partial Excluded Area) घोषित गरियो । बंगालको त्यस चुनावी माहोलमा राय साहेव हरिप्रसाद प्रधानको त्यस चुनावी माहोलमा राय साहेव हरिप्रसाद प्रधानको प्रतिद्वन्दी भएर पहाड़वासीको प्रतिनिधित्व गर्दै डम्बरसिंह गुरुङ स्वतन्त्र उम्मेदवारका रुपमा उठी चुनाव जितेर बंगालको विधानसभामा नेपालीहरुको प्रथम जनप्रतिनिधिका रुपमा निर्वाचित भए । खास गरी डम्बरसिंह गुरुङले त्यस बेलाको दार्जीलिङका गाउँगाउँ, कमानबस्तीलाई आफ्नो चुनावी अभियानको पकड़ क्षेत्र बनाएकाले पनि राय साहेबले त्यो चुनाउ हार्न परेको थियो । चुनाउ हारे तापनि राय साहेबको राजनीतिप्रति गम्भीर चासो रहेको कुरो स्पष्ट हुन्छ ।

त्यस बेलाको भारतीय स्वतन्त्रता संग्रामको उर्लंदो वातावरणमा प्रबुद्ध नेपालीहरु पनि अंग्रेजहरुको विरोधमा लागेका थिए । यसको प्रभाव तत्कालीन नेपालमा पनि पर्यो । नेपालका नेपालीहरु पनि जहानियाँ राणा शासकहरुको विरोधमा देशभित्र-बाहिर सक्रिय रुपमा संग्राममा उत्रिसकेका हुँदा सन् १९४० ताक राणाहरुले उनीहरु- सूर्यविक्रमज्ञवाली, धरणीधर कोइराला, सन्तवीर लामा 'खरसाङे माइला'को सँगमा लागेर हरिप्रसाद प्रधानले दार्जीलिङबाटै राणा विरोधी नेपालका दलहरु (नेपाली कांग्रेसलगायत अन्य) – लाई मनोबल दिई सघाइरहेका थिए । राणा शासकहरुले त्यसको जानकारी पाई दिल्लीस्थित ब्रिटिश शासकहरुलाई अनुरोध

गरी विशेष शान्ति सुरक्षा ऐनअन्तर्गत तिनीहरुलाई झ्यालखानामा थुन्न लगाए। फलस्वरूप सन् १९४४ सालमा अंग्रेजहरुले Defence of India Act अन्तर्गत हरिप्रसाद प्रधानलगायत् सूर्यविक्रम ज्ञवाली, धरणीधर कोइराला, सन्तबीर लामा 'खरसाड़े माइला' जस्ता राजनीतिक व्यक्तित्वहरुलाई पक्राउ गरी कलकत्ताको अलिपुर सेन्ट्रल जेलको ब्रिटिश वार्डमा पहिलो दर्जाका राजनीतिक बन्दीका रुपमा थुनिए। राणाहरुले ती व्यक्तिहरुलाई नेपालमा पठाइदिन अनुरोध गरे तर राणाहरुले तिनीहरुलाई पनि झुण्ड्याउलान् भन्ने शङ्कामा ब्रिटिश-भारत सरकारले तिनीहरुलाई भारतीय जेलमै राखे। करीब एक वर्षपछि तिनीहरुलाई मुक्त गरिदिए, तर हरिप्रसादलाई भने सिक्किममा लगेर तीनवर्षसम्म नजरबन्द गराइराखे। त्यसै बखत उनी सिक्किम स्टेट काउन्सिलर सिक्किम राज्यको विकासका कार्यक्रमहरुका खाका तयार पारियो। उनकै कालमा मुख्यमुख्य विकासका योजनाहरु बनाइयो। भरखर भरखर अर्थात सन् १९४७ सालको अप्रेल १५ तारिकका दिन त्यहाँ प्रबुद्ध साहित्यानुरागीहरु -अगमसिंह तामाङ, पदमसिंह सुब्बा, तुलसीबहादुर छेत्री र निमा वाङ्दी तारगेन लेप्चाको सद्प्रयासबाट स्थापित 'अपतन साहित्य परिषद'- लाई रायसाहेब हरिप्रसादले सभापतिका हैसियतले आफू सिक्किममा बसुञ्जेल सहयोग गरिरहे।

१०४ वर्षको जहानियाँ राणाशासनको समाप्तिपश्चात् नेपालमा प्रजातन्त्र आएपछि कानूनविद्का हैसियतले रायसाहेब हरिप्रसाद प्रधानलाई नेपालमा ससम्मान बोलाइयो र राजा त्रिभुवनले उनलाई नेपालको नवगठित प्रधान न्यायालयका प्रथम प्रधान न्यायाधीशको पदभार सुम्पिदिए। उनको प्रधान न्यायाधीशत्वकालमा नेपालको कानून प्रणालीमा परिवर्तन ल्याएको बारे केही थप जानकारी दिन यहाँ आवश्यक छ।

त्यस बेला भारतको राजधानी शहर नयाँ दिल्लीमा अन्तराष्ट्रिय कानून तथा न्यायिक सम्मलेन भएको थियो। त्यस सम्मलेनमा भाग लिन नेपालको तर्फबाट सम्माननीय प्रधान न्यायाधीश हरिप्रसाद प्रधान पुगेका थिए। त्यस सम्मेलनमार्फत नेपालको साविक कानूनमा हेरफेर गर्ने क्रममा स्त्रिधनको सुरक्षा, पारपाचुके गर्न पाउने, मृत्युदण्ड दिन नहुने जस्ता प्रश्नहरुमाथि छलफलको विषय उठाएका थिए। उनका अनुसार नेपालका कतिपय कानूनहरु विश्वकै कानून स्तरका थिए, जस्तै

तत्कालीन हिन्दु अधिराज्य नेपालमा ब्राम्हण र स्त्री जातिलाई मृत्युदण्ड दिइने कानून नै (Customary Law) थियो । उदाहरणार्थ, विशेष गरी नेवार समुदायमा पत्नीले सिङ्गो दश दाना सुपारी पतिको सिरानीमुनि छाड़ेर गएपछि स्वत: पत्नीले पारपाचुके गरेसरहको कानूनी मान्यता थियो । स्त्रीधनको सम्बन्धमा दाइजो पनि पर्दथ्यो । कतंकदाचित सरकारले सर्वस्वहरण गरे खण्डमा पनि स्त्रीधन भने सुरक्षित नै हुन्थ्यो । अर्को मुख्य कुरो नेपालमा विद्यमान धार्मिक स्वतन्त्रता र सहिष्णुता पनि हो । दिल्लीको उक्त सम्मेलनमा प्रधान न्यायाधीश हरिप्रसाद प्रधानले नेपालका तिनै परम्परागत रुपमा चलिआएका साविक कानूनहरुका बारेमा जानकारी दियका थिए । नेपालको कानून व्यवस्थाप्रतिको उनको योगदान उल्लेखनीय रहेको छ । यसरी नेपालको प्रजातन्त्र (सन् १९५०) प्राप्तिपछि नेपालमा सर्वप्रथम स्थापना भएको प्रधान न्यायालयका प्रथम प्रधान न्यायाधीश हरिप्रसाद प्रधान त्यस उप्रान्त आफ्नो जीवनको अन्तिम घड़ीसम्मै नेपालमा बसे ।

मृत्यु र नेपाली समाजमा त्यसको गम्भीर आर:-

अधिकांस उमेर भारतका दार्जीलिङ र सिक्किममा बिताएका राय साहेब हरिप्रसाद प्रधानको जीवनको अन्तिम खण्ड भने नेपालमा बित्यो । शारीरिक अस्वस्थताका कारणले राजासमक्ष राजीनामा पेश गरे । केही दिनपश्चात् अर्थात वि.सं २०२० साल ,पौष शुक्लपक्ष २ गतेका दिन (अर्थात सन् १९६३ मा) आफ्नो निवास पाटनको झम्सिखेल (नेपाल) मा ६९ वर्षको उमेरमा उनको देहावसान भयो । उनको शवलाई पूर्ण राजकीय सम्मानका साथ तोपको सलामी दिएर पाटनको संखमूल घाटमा अन्तिम संस्कार गरियो । भनिन्छ, उनको देहावसान भएको दिन धेरै जसो नेपालीहरुले एक दिनको छाक छाड़ेका थिए । मूल थलो भक्तपुर (भादगाउँ) भएकाले गर्दा नेवार जातिको परम्पराअनुसार पाटनमा उनको परिवारको मुर्दा गुठी नभएको हुँदा उनको मलामीमा उपस्थित जनसमुदायले आखिर दिवंगत् प्रधान न्यायाधीश पनि त हाम्रै पिता हुन् भनि सबैले पालैपालो उनको शवलाई बोकेर घाटसम्म पुर्याएको जानकारी पाइन्छ । वास्तवमा उनको असामयिक निधन दार्जीलिङ सिक्किमलगायत सिधै नेपाली समाजकै निम्ति एउटा आकस्मिकता थियो र साथै एउटा अपूरणीय क्षति पनि थियो ।

